# बौद्ध सान्ध्य भाषा बोध

(सान्ध्य भाषा कारिका उद्धृत)

बज्रयान माहायान प्रत्येक बुद्धयान चर्य गर्दा सान्ध्य भाषा
सिकेर पंचामृत प्रयोग गर्ने विधि :


सम्पादन / अनुवाद
केदार शाक्य

संकलन : कविराज सद्धर्मराज बज्राचार्य शास्त्री





प्रकाशक
सिद्धि - इन्द्र स्मृति गुठी
पिम्बहल, यल (ललितपुर)।
फोन : ५३३३१०

# प्राक्कथन

विविध बौद्ध ग्रन्थमा सान्ध्य भाषा शव्द धेरै ठाउँमा प्रयोग भएको छ। सबै सान्ध्य भाषाको भावार्थ ज्ञान गुरु सेवावाट मात्र लाभ हुन्छ। बौद्ध ग्रन्थ अवदान सूत्रमा उल्लेख भएको बुद्धोपदेश ज्ञान, यथार्थ ज्ञान सत्यवाद भइरहन्छ।

कतिले कल्पना गरी बुद्ध वचनलाई व्यंग्य गरी लेखिरहेको पनि छ। सत्यलाई असत्य, असत्यलाई सत्य गर्ने गर्दछ। आफूले स्वयं गर्ने मिथ्या अपराध चिल्लो पारी सज्जन साधुलाई इर्ष्या गर्नु दुर्जन अभिमानी स्वभाव हो।

कलियुगमा यस्ता उत्पन्न हुन्छन् भनी करुणापुण्डरिकमा उल्लेख छ। करुणापुण्डरिकमा भनिए अनुसार कलियुगमा तामसी धर्म अनिवार्य भएर आउँछ। धर्म भाणक विद्वानहरुको परमार्थ उपदेशलाई उल्टो व्यंग्य गरी उपहास गदर्छ। सान्ध्य भाषाको भावार्थ ज्ञान बोध गर्ने कोशिश गर्दैन। परमार्थ ज्ञानमा बस्दैन। परमार्थ ज्ञानलाई विश्वास गर्दैन। त्यस किसिमका मानिसहरुलाई उद्धार गर्न सकियोस् भनी समुद्रेणु ब्राह्मण रत्नगर्भ बुद्ध भगवान तथागतको अगाडि बसी प्रणिधान गरी आउनु हुने यो भद्रकल्प सहानाम लोक धातु शाक्यमुनि भगवान बुद्ध हुनुभयो।

उहाँले दिनु भएको उपदेश नवसूत्र र पंचाकाराभि संवोधि ज्ञानमा भएको सान्ध्य भाषा अनुसार धर्म कर्म चर्य गर्नु पर्दछ भनी उल्लेख छ।

तथागत गुह्यक सूत्र दुई भागमा छ। यो सूत्रमा सान्ध्य भाषा शव्द धेरै प्रयोग भएको छ। पंचाकारभि संवोधि ज्ञानमा पनि सान्ध्य भाषा देखाइएको छ।

यो सान्ध्य भाषा बोध भन्ने पुस्तक र तथागत गुह्यक सूत्र, अनुत्तर तन्त्रमा भएको बोधिज्ञान लिखित गभीर भइ रहेको बुद्ध वचन अनुसार बज्रयानमा, बोधिसत्वयान प्रत्येक बुद्धयान चर्य गरी जाने आफ्नो चित्तलाई बोधिचित्तमा लिन विशेष ज्ञानबर्धक हुन्छ।

बौद्ध सान्ध्य भाषामा परमार्थ ज्ञान लाभ हुने पंचामृत, पंचज्ञान, पंचप्रदीप, पंचाकुश, पंचमकार, पंचधातु, मद्य भनेको नारीकेलोदक, मांस भनेको द्राक्षाफलादि, नरमांस भनेको त्रिफला आदि शव्द प्रयोग भएको छ। यस्तो परमार्थ ज्ञानमा भएको उत्तम धर्म रुपले प्रयोग गर्नुपर्ने पवित्र ज्ञान छाडेर संसारमा घुमी हिंड्ने संर्वा न धर्मको रुपले विपरित अर्थगरी प्रयोग भईरहेको छ।

एक दिन मैले पूजा कार्यक्रममा अनुचित तरिकाले प्रयोग नगर, सान्ध्य भाषाको भावार्थ गरी असल कुशलमूल चर्य गर्नुपर्दछ र यस्तो ढंगले प्रयोग गरेमा उत्तम हुन्छ भनी उपदेश गर्दा अपवाद गरी मलाइ नै उल्टो व्यंग्य गऱ्यो। उपहास गरी आक्षेप समेत लगायो।

यो मलाई मात्र व्यंग्य गरेको होइन। बुद्धवचनलाई व्यंग्य गरेको भन्ने अनुभव गरें। मैले सहेको हुँदा मलाई क्षान्ति धर्म लाभ भयो भनी सम्झें।

भगवान बुद्धको उपदेश महायान सूत्र अनुसार आफूलाई बिमलचित्त लाभ हुने चर्य गर्नलाई मैले उपदेश गरेको ज्ञान अनुसार परमार्थ ज्ञान प्रयोग गरेमा बिमलचित्त भई पछि परलोकमा आनन्द हुने सुख भोग हुन्छ। कल्पना गरेमा आफ्नो हृदय समलचित्त भई कल्प सम्म दुःख भोग गरी रहनुपर्ने हुन्छ। यो कुरा बुद्ध उपदेशमा उल्लेख छ।

वोधिचित्तको पर्याय बिमलचित्त हो। सान्ध्य भाषाले बोधिचित्तलाई विमलचित्त भन्दछ। समलचित्त भनेको क्लेश उपक्लेश थुप्रनुलाई भन्दछ।

वोधिचित्त धारण गरी उत्तम चर्य गरी गएको पुण्यले सुखावतिको अमिताभ तथागतले प्रत्येक बुद्ध पद लाभ गर्नुहुन्छ भनी उल्लेख छ। उत्तम चर्य गर्ने विधि विधान यहाँ नभएको होइन। तीर्थ सेवा, गुरुसेवा, कल्यान मित्र, बुद्ध धर्म संघ सेवा गर्नेवस्नु प्रत्येक वुद्धयान हो। महायान पनि भनिन्छ। यो दुवै एकार्थ भएको छ।

धर्म कर्म दान पुण्य गर्दा सान्ध्य भाषा विपरित नहुनेगरी नियम पूर्वक चर्य गर्नु बोधिचित्तोत्पाद गरी सबै प्राणीको उद्धार गर्न हो। देशमा सर्वत्र शान्ति होस् भनी उत्तम कुशलमूल कर्म गर्ने विधि उपोषथ व्रत, अष्टमी व्रत , तीर्थ सेवा व्रत कर्म गर्नु प्रत्येक बुद्धयान महायान हो। वज्रयान महायान पछि आएको भनी अलग गर्नु उचित छैन। बिमलप्रभा सूत्रमा "वज्रयानले श्रावक प्रत्येक यान भन्दा पनि अग्र सम्यकसम्बुद्ध यानमेव वज्रयान" अभिषेक पटलमा बुद्धोपदेश उल्लेख छ। परमाक्षरज्ञान सिद्धिज्ञान पटलमा पनि त्यस्तै उल्लेख छ।

उक्त ज्ञान पटलमा भएको उपदेश आखां नदेख्नेहरुले ट्वाक्क ठीक्क नहुने गरी लेखेर प्रचार गर्नु बुद्धयानलाई विकृत गरी देखाएको विषय "स्थिर सिद्धि दूषण दृष्टान्त धर्मो असिद्ध" भन्ने संज्ञा दिएको छ।

उपरोक्त कुराहरुमा म यति जान्ने छु भनी लेखक भएको होइन। म पनि एक अल्पज्ञ नै हुँ। गुरुसेवा गरी आएको पुण्यले एक सानो पुस्तिका लेखि बुद्ध उपदेश गर्ने शक्ति छैन।

यो पुस्तक प्रकाशन गर्न श्रीधर्म बहादुर शाक्यज्यूले बोधिचित्त उत्पन्न गरी प्रकाशन गर्न सहयोग दिनु भएकोलाइ सहर्ष साधुवाद दिन्छु। जगत प्राणीहरुको उद्धार गर्न सक्ने बुद्धकार्य सफल होस् भन्ने शुभकामना दिन्छु। अस्तु।

*- सद्धर्मराज बज्राचार्य*

# त्रिरत्न शरण

रत्नत्रयं मे शरणं सर्व प्रतिदिशाम्यघं ।
अनुमोदे जगत्पुण्यं बुद्धबोधौं दधे मनः ॥
आबोधौं शरणं यामि बुद्धधर्मगणोत्तमं ।
बोधिचित्तं करोम्येष स्वपरार्थ प्रसिद्धये ॥
उत्पादयामि बर बोधिचित्तं । निमण्त्रयामि
इह सर्वसत्वान् ॥ इष्टाञ्चरिष्ये बरबोधिचारिकाँ ।
बुद्धोभवेयं जगतो हिताय ॥



दिवंगत सिद्धिराज शाक्य तथा इन्द्र कुमारी शाक्य

# दुई शब्द

यो वौद्ध सान्ध्य भाषा वोध अत्यन्त महत्वपूर्ण उपयोगी पुस्तक हो। आजकल यस्तो पुस्तक कसैले पनि प्रकाशन गरेको देखेको छैन। पं. सद्धर्मराज वज्राचार्य बौद्ध शास्त्र तन्त्र अध्ययन र धेरै परिश्रम, अनुसन्धान गरी तयार गर्नु भएको पुस्तक देखि मलाई सहर्ष मात्र होइन बोधिज्ञानमा भएको बुद्धयान धर्मलाई टेवा दिने मनसाय पनि भयो। यो पुस्तकको ज्ञान पूजाविधि कार्यक्रममा प्रयोग गर्नु पर्ने अनिवार्य भएको देखी प्रकाशन गर्न सहयोग गरेको छु।

परन्तु मेरा पूज्यपिता स्व. सिद्धिराज शाक्य र पूज्यमाता इन्द्रकुमारी शाक्यको पुण्यस्मृति र उहाँहरुको सुखावती भुवनमा बास होस् भन्ने कामना गरी यो पुस्तक धर्मदान गरेको छु। यस धर्मदान गरेको पुण्यले सवै प्राणीहरु पनि वोधिज्ञान मार्गमा लागी वुद्धत्व प्राप्त गरी संसार तर्न सफल होस् भन्ने प्रणिधान गर्दछु।

यो वौद्ध सान्ध्या भाषा वोध सम्पूर्ण नेपाली दाजुभाइ दिदीवहिनीहरुका लागि पनि उपयोगी हुने मैले विश्वास लिएको छु। त्यसैले नेपाली भाषामा अनुवाद गरी प्रचार गर्न पाए वेश हुने थियो भनी यस गुठीका सदस्यसचिव श्रद्धेय श्री केदार शाक्यज्यूलाई अनुरोध गरें उहाँले सहर्ष स्वीकार गर्नु भयो। आफ्नो अमूल्य समय दिनु भएर यस पुस्तकलाई उहाँले श्रद्धाका साथ अनुवाद र सम्पादन समेत गरी दिनु भयो। त्यसका लागि म उहाँलाई हृदयदेखि नै साधुवाद दिनु चाहन्छु। यो पुण्यकार्यले उहाँलाई आरोग्य लाभ होस् भन्ने विनम्र कामना गर्दछु।

श्री शाक्यज्यू राष्ट्रिय दैनिक गोरखापत्रको वरिष्ठ सम्पादक हुनुहुन्छ। उहाँ बौद्ध संस्कृतिका सिद्धहस्त लेखक हुनुहुन्छ। उहाँले राष्ट्रिय बौद्ध सम्मेलनहरुमा बौद्ध संस्कृति विषयमा कार्यपत्रहरु लेख्नु भएको छ। उहाँको अध्ययन अनुसन्धानको विषयसंग यो पुस्तकको विषय पनि मिल्ने भएकोले यसबाट सबै कल्याण मित्रहरुले लाभ उठाउनु हुने मैले विश्वास लिएको छु।

अन्त्यमा दुबै लेखक महानुभावलाई हृदयदेखि नै पुनः धन्यवाद दिन चाहन्छु।

शुभचिन्तक
धर्मबहादुर शाक्य
तथा
सकल परिवार
पिम्वहाल, ललितपुर

तिथि : २०५८ साल वैशाख शुक्ल तृतीया
बुद्ध सम्वत २५४५

# सान्ध्य भाषाको कुरा

नेपालको वुद्धधर्म संस्कृति भन्नु नै महायानी वज्रयानी बौद्ध परम्परा हो। यसलाई खासगरी नेवार बौद्ध समुदायमा विशेष महत्व दिइएको छ। जन्मदेखि मृत्यु पर्यान्त सम्म गरीने पूजा विधि र व्यवहारमा भगवान वुद्धको उपदेशलाई आत्मसात् गर्ने परम्परा छ। तर समय र परिस्थिति कालक्रम अनुसार विधि व्यवहारमा धेरै फरक आउन थालेको छ। भावना र श्रद्धामा कुनै फरक छैन। तर पूजा आदि विधि व्यवहारमा फरक आउनुको मुल कारण संस्कृत भाषामा भनिएका त्यस्ता कुराहरुलाई सजिलै वुझ्न नसक्नु हो। यो बौद्ध सान्ध्य भाषा भावार्थ वोधले त्यसलाई वुझ्न सजिलो पारिदिएको छ। हाम्रो समाजमा सबैले वुझ्ने मद्य, मांसलाई सान्ध्य भाषामा नरिवल भित्रको पानी र वाहिरको गुदीलाई वुझाउने कुरा वुझ्नु पर्दछ। आचार्य गरुहरुले किन यस्तो लाक्षणिक शव्द प्रयोग गरे भन्ने वेग्लै अध्ययन र अनुसन्धानको विषय हो। संस्कृतका कतिपय शव्दलाई सोझै नेपाली भाषामा प्रयोग गर्दा पनि त्यस किसिमको अप्ठेरोपन आउन सक्तछ। सान्ध्य भाषा प्रयोग गर्नुको अर्थ भगवान वुद्धले बताउनु भएको मानव कल्याणका कुराहरुलाई गहिरिएर वुझ्न निकै गहन अध्ययन चाहिन्छ भन्ने संकेत पनि हो। प्रतिकात्मक शव्द प्रयोग गरी वताइएका यस्ता ज्ञानका कुरालाई वुझ्न आफू सक्षम हुनुपर्दछ भन्ने आशय पनि यसमा निहित छ। पहिले भाषा वुझ्नु पर्ने र त्यसपछि त्यसको अर्थ वुझेपछि मनमा जुन आनन्दको अनरभूति हुन्छ त्यो पछि गएर सहज अनुभव हुन्छ।

यो पुस्तक महायान वुद्धधर्मको विषय वुझ्न र अध्ययन गर्न चाहने जिज्ञासुका लागि पहिलो खुड्किलो हो। यसको अर्को भाग पनि प्रकाशन गर्ने पक्षमा रहँदा रहँदै पनि गर्न सकिएन। पाठक वर्गले यसलाई रुचाइ दिनु भयो भने परिश्रम सफल भएको ठान्ने छु।

यस पुस्तकमा असावधानीवस कुनै त्रुटी भएमा विज्ञ पाठक वर्गबाट औंल्याई दिनु भएमा त्यसलाई अर्को पटक सुधार गर्ने छु।

यसमा प्रयोग भएको बाक्य गठन मेरो मौलिक होइन। किनभने संस्कृत र नेपाल भाषाबाट रुपान्तर गर्दा मुल लेखकको भावना नखलबलियोस् भन्ने मनसायले पनि मैले त्यसो गरेको हुं। नेपाल भाषाको मेरो अल्प ज्ञानका भरमा रुपान्तर गरेको छु। विज्ञ पाठक वर्गले त्यसमा कुनै त्रुटी भएमा क्षमा गर्नु हुने नै छ। बुद्ध उपदेशको कल्याणकारी भावना र सत्य वचन नै मेरा लागि प्रेरणाको मुहान हो।

अन्त्यमा, मेरी छोरी मेरिना शाक्यले यो पुस्तकको कम्प्यूटर टाइप गरी मलाई सहयोग पुऱ्याएकोमा उसलाई पनि साधुवाद दिन्छु। उनको लगनशीलताले गर्दा नै यो पुस्तक छपाईमा सजिलो भयो। त्यस्तै पुस्तक प्रकाशक सिद्धि इन्द्र स्मृति गुठीका संस्थापक श्री धर्मवहादुर शाक्यको आग्रह र सहयोगवाट नै मैले यो पुस्तकलाई पाठक वर्ग समक्ष ल्याउने आँट गरें। उहाँ प्रति पनि आभार व्यक्त गर्दछु।

केदार शाक्य
बुद्ध संवत : २५४५
२०५८ वैशाख शुक्ल तृतीया
ने. सं. ११२१/२२
कुलेश्वर, काठमाडौं

# बौद्ध सान्ध्य भाषा भावार्थ

वुद्धधर्मको बज्रयानले सम्पूर्ण प्राणीको मनलाई धर्मधातु भन्दछ। जसले धर्मधातुलाई चिन्दछ उसले मनलाई धर्मधातु स्वरुप बोधिचित्तोत्पाद हुने वोधिचित्तलाई वुद्धविम्व भनेर चिन्दछ। वुद्धविम्बलाई बुद्धगर्भ भनिन्छ। यस्तो वुद्धगर्भ स्वरुप वोधिचित्तलाई सँधै नमस्कार छ। तथागत गुह्यक सूत्रको वुद्ध वचनमा यस्तो उल्लेख छ।

पहिलेदेखि नै मांस मद्य प्रयोग बारे यसप्रकार उल्लेख भएको छ। तथागत गुह्यक सूत्रमा मांसको अर्थ फलफूल हो। जस्तो कि = मांस = दाख फलमुलादिकम्। भनेर टीका भावार्थ दिइएको छ। त्यसकारण पशुपंछीको मासु भनी अर्थ लगाई प्रयोगगर्नु व्यर्थ हुन्छ। मद्यं नारीकेलोदकम = मद्य भनेको नारीकेलोदकम्लाई भनिएको हो।नारीकेलोदकमको अर्थ नरिवल भित्रको पानीलाई भनिन्छ। रक्सी भनिएको होइन। यदि नरिवलको पानी कम भए कवाफ चिनीको रस लिनुपर्ने बुझ्नु पर्दछ। कवाफ चिनीको रसलाई कंकोल रस पनि भनिन्छ। यस्तो चीज पूजाविधिमा प्रयोग भएमा उत्तमपूजा हुन्छ भनिएको छ। सान्ध्य भाषाको यथार्थ अर्थवोध गरी तत्वज्ञान प्रयोग गर्नु तन्त्रयान हो। यन्त्रयान भनेको अनुत्तर ज्ञान हो। सान्ध्य भाषाको श्लोक यसरी उल्लेख भएको छ :

वज्रोदकं = वजोदकं समाख्यात नारीकेलोदंक मतं।
बुद्धपूजादी सर्वेसु पिवन्ति सुरपानयः।

नारिकेलोदकलाई बज्रोदक भनिन्छ। यस्तो बज्रोदक सम्पूर्ण वुद्ध पूजामा प्रयोग गर्दा सुर (चक्रसंवर आदि देवता) हरुले र (देवीहरुले) वज्रदेवीहरुले पिउँदछ। पिवन्ति = पिउनुहुन्छ भनी भावार्थ टीका दिइएको छ।

सुखान शब्दको अर्थ सुरापान भनिएको छैन। टीकामा यस्तो उल्लेख छ :

सुर = चक्रसंवर। बुद्ध देवता।
पानको = देवीगण, भगवती आदि स्त्री वाचकलाई बुझाउँछ।

ज्ञानोदय तन्त्रमा सान्ध्य भाषाको अर्थ यसरी दिइएको छ।

## बौद्ध सान्ध्य भाषा बोध
## सान्ध्य भाषा शब्दज्ञान बोध

सान्ध्य भाषा शब्दज्ञान बोध गर्न तल दिइएको भावार्थ अनुसार शुद्ध रुपले परमार्थ प्रयोग गर्न यसरी भनिएको छः

| सान्ध्य भाषा शब्द | साधारण अर्थ | भावार्थ |
|---|---|---|
| महिष | भैंसी | भुइँफर्सी |
| अज | बोका | नरिवलको डल्लो (कलिलो) |
| मेषी | भेंडा | बेल |
| हंस | हाँस | तोरी |
| कुक्कुट | कुखुरा | कांक्रो |

तत्व ज्ञानहीन भएकाहरुले पंचवली दिने भनेर पाँचवटा पशुवली दिएर धर्मभाव गरिरहेका छन्।

यसरी पशुवली दिएर पूजा गर्दा देवता खुशी हुँदैन। त्यसरी पशुवली दिएर पूजा गर्नु संवृत्ती धर्म हो।

बुद्ध वचन अनुसार तत्वज्ञान बुझेर पंचवली दिंदा पाँच प्रकारको चीज भनी भावार्थ बुझ्नु पर्दछ। भुईफर्सी, नग्विलको कलिलो डल्लो, वेल, तोरी, कांक्रो राखेर विधि अनुसार गाईको दूध झारी जसले पूजा गर्दछ त्यसलाई देखेर देवदेवीगण खुशी भइ मनोरथ कामना पूर्ण हुन्छ। त्यसैले तत्व ज्ञान वुझेर पूजा गर्नु उत्तम हुन्छ। यस्तो उत्तम पूजा परमार्थ धर्म हो।

संबृत्ती धर्मगरी ईश्वर खुशी हुदैन। परमार्थ धर्म गरेर मात्र देवता खुशी हुन्छ। वरदान दिन्छ भनी ज्ञानसिद्धी तन्त्रमा उल्लेख छ।

संबृत्ती धर्मलाई तमोगुण धर्म पनि भनिन्छ। निर्वाण मर्गी भ्रष्ट, ज्ञानज्योतिहीन, वोधिचित्तहीन, तीर्यक लोक प्रवेशक, समलचित्त भइरहन्छ।

परमार्थ धर्मलाई सत्वगुण धर्म भनिन्छ। वोधिचित्य प्रदायक, निर्वाण ज्ञान दर्शक, तथता ज्ञान प्रदर्शक, तत्वज्ञान धारक विमलचित्त भइरहन्छ।

विमलचित्त अमर स्वभाव भइरहन्छ। समलचित्र क्लेश स्वभाव भइरहन्छ। विमलचित्तमा करुणा उत्पन्न भई शान्त स्वभाव हुन्छ।

समलचित्तमा राग, द्वेष, मोहलिप्त भइरहन्छ।

## तत्वज्ञ तान्त्रिकले चटक गर्ने बलि भोग

तत्वज्ञ तान्त्रिकले प्राणीहरुलाई दुःख नहुने गरी अहिंसक रुपले चटक गरी शान्त हुनेगरी बलिभोग दिएर निर्विघ्न तरिकाले यसरी कार्य गर्दछन् :

चिन्तामणि कलशमा कालो भटमास, बोडी, म्यावजी (भिजाएर भुटेको चिउरा) सिंगो मास र चिउरा यति पाँच थोक राखेर विधिपुर्वक पूजा गरिसकेपछि त्यो पाँच प्रकारको अन्न तान्त्रिक झोलीमा राखि तन्त्र मन्त्र विधि अनुसार चटक गर्दछ। यसरी उचित स्थानमा प्रयोग गर्दृछ।

उदाहरण यसरी दिइएको छ :

वन्धुदत्त (आचार्य) बज्राचार्य कालरुप क्षेत्रमा गमन भएको वेला यक्षगण सन्तोष पार्न उपरोक्त पाँच चीज राखि चिन्तामणि कलश पूजागरी देखाइएको वंशावलीमा उल्लेख छ ।

कुलन्तमास अजोत्पत्ति कालो भटमास(जिम्दो) बाट बोका उत्पत्ति गर्ने ।

श्वेताशिम्वि हंसोत्पत्ति– बोडीबाट हांस उत्पत्ति गर्ने ।

भृष्ट पृथक मेष्योतपत्ति– भिजाएर भुटेको चिउराबाट भेंडा उत्पत्ति गर्ने ।

भाषोत्पत्ति मेष– सिंगो मासबाट रांगो उत्पत्ति गर्ने ।

चिप्तान्न मत्स्योत्पत्ति–चिउराबाट माछा उत्पत्ति गर्ने ।

उपरोक्त प्रकारले बोडी, भिजाएर भुटेको चिउरा (स्यावजी, सिंगो गेडा मास, कालो भटमास, चिउरा यति पाँच किसिमको अन्नलाई विधिपुर्वक सिद्ध गरी इन्द्रजालले उत्पत्ति गरी प्राणी हिंसा नगरी यक्षगणहरुलाई भोजन दिएर यक्षगणलाई वशमा लिई सन्तोष पारी दिएको इन्द्रजाल तन्त्र पुरुषार्थ साधन तन्त्रयानमा उल्लेख भएको छ ।

त्यसैले सान्ध्य भाषाको अर्थ तत्वज्ञान बुझेर असल चर्या गरेमा मात्र पुरुषार्थ सिद्धि लाभ भई उत्तम हुनेगरी उद्धार कार्य गर्न सकिन्छ। अधम विपरित ढंगले अर्थ लगाई काम गर्नु फलबाट विघ्न भई स्वयं च्युत भई जाने दृश्य सामुन्ने आउँछ। यसरी पूर्वकालका तान्त्रिकाचार्यहरुले पनि उल्लेख गरी गएका इन्द्रजाल तन्त्र यदाकदा देखिन्छ। स्वयं अन्तरध्यान भई जाने, फेरि प्रकट भई देखिने, बाँदर, भालु बशमा लिई चटक गरी देखाउने तन्त्रमन्त्र इन्द्रजाल शास्त्रमा सान्ध्य भाषाले देखाएको छ ।

## महामांस धूप

> कस्तुरी शिल्हकं ज्ञेयं कर्पुरं धृतमुच्यते ।
> महामांसेति विख्यातं पुजयेते विधिनासदा ॥

तथागत गुह्यक सूत्र बुद्धोपदेश अनुसार महामांस भनेको कस्तुरी शिल्हाय्, कपुर, गाईको घिउ यति चार चीज मिलाउनुलाइ महामांस धुप भनिन्छ । यस प्रकारले महामांस प्रयोग गर्री सधैं पूजा गर्ने । यो देव देवीहरुको धुप हो । गुह्य आगममा पूजा गर्ने धुप हो ।

अज्ञानीहरुले महामांस शव्दलाई मासु भनी अर्थ लगाइ गोप्य रुपले मानिसको केटाकेटी लगी मारेर मानिसको मासु सुकुटी पारी धुप लगाउने गरेका छन् । यो व्यर्थको नरकगामी कार्य हो ।

**पुनश्च :**

> पुर्वोक्त चतुविधं द्रव्यं प्रयोजयेत् यथाविधि
> महामांस समाख्यातं मध कंकोलकं मतम् ॥

फेरि माथि भनिएको चार प्रकारको द्रव्य (चीज) राखेर यथाविधि यज्ञ होमार्चन र गुह्य आगमनमा पूजा गर्ने । यो चार द्रव्यलाइ महामांस धुप भनिन्छ । फेरि मद्य भनेको कंकोल रस (सिनल चिनीको रस) लाई भन्दछ । त्यो रस राखेर यथाविधि पूजा गर्ने । उत्तम सिद्धि लाभ हुन्छ भन्ने गुह्यसिद्धि ग्रन्थमा भनिएको छ । "यो प्रमाणले सिद्धिदायक भइरहेको हुन्छ ।

## पंचमकार :

पंचमकारको सान्ध्य भाषामा पनि गुह्य अर्थ छ। पंचमकारको विषयमा भगवान बुद्धले विद्वान बोधीसत्वहरुलाई भन्नुभएको यस्तो छ : पंचमकारलाई पंचतत्व, कुलद्रव्य कुलतत्व पनि भनिन्छ।

> मद्यं मांसं च मत्स्यं च मुद्रा मैथुनमेव च ।
> मकार पंचकं देवी देवता प्रितिकारकम ।।कुलार्णव।।

भावार्थ टीका यस्तो उल्लेख भएको छ। मद्य भनेको वास्तवमा समाधियोग अवस्थामा अत्यन्त रस मानी कहिले पनि विचलित नहनुलाई अमृत रस भन्दछ। यो अमृतरसलाई मद्य भनिन्छ। रक्सीलाई भनिएको होइन।

मांस = मांस भनेको अज्ञानरुपी पशु स्वभावलाई ज्ञानरुपी खड्गले छेदन गरी चित्तलाई तथता धर्म (परमार्थ धर्ममा) राखि राख्नुलाई मांस भनेर जान्नुपर्दछ। हिंसा गरी राखेको मासुलाई भनिएको होइन।

मीन = मीन भनेको सान्ध्य भाषामा श्वास प्रश्वास गर्ने मध्ये श्वास दाहिने प्वालबाट भित्र्याउनु, श्वास बायाँप्वालबाट छाड्नेगरी आफ्नो वशमा राख्नुलाई मीन भनिन्छ। साधारण अर्थमा माछा राख्नु भएको होइन।

मुद्रा = मुद्रा भनेको कुसंगत छाडी सत्संगत गरी त्रियान तीनवटा बुद्धयानलाई एउटा उपाय कौशलको ज्ञान थाहा पाउनु धारणा गर्नुलाई मुद्रा भनिन्छ। यो पहिलो मुद्रा हो। दुई मुद्रा भनेको आवाहनादि कार्यमा प्रयोग गरिने भएकोले देवताहरुको प्रितिकारक हुन्छ। यो स्वभाव शुद्धा लिने मुद्रा हो। तीन मुद्राको अर्थ मोदकारक भएकोले यो पौष्टिक पनि हुन्छ। चार मुद्राको अर्थ दिव्य भावापन्न मुद्रा कुण्डालिनी संयुक्त चित्तलाई हजार पटक पनि ध्यानमा राख्नु हो। यो मुद्राको अर्थ धेरै छ।

मैथुन = मैथुन सुषुम्ना नाडीसँग प्राणलाई समावेश गर्ने विधिलाई भनिन्छ। यो वायुयोग गर्ने क्रिया हो।

यस प्रकारले पंचमकार प्रयोग गरी पूजा, जप ध्यान विविध मुद्रालाई विधानमा देखाई राखे अनुसार पवित्र क्रिया चर्य गर्नु हो। उपरोक्त पंचमकार– मध, मांस, मीन, मैथुन, मुद्रा यति पाँच शब्दको भावार्थ वुद्ध वचन अनुसार प्रयोग गरेमा मात्र देव देवीहरुको प्रितिकर हुन्छ। अन्यथा विपरित प्रयोग गरेको सबै कार्य व्यर्थ भएर नरकगामी हुन जान्छ। यो कुरा कुलार्णवमा उल्लेख भएको छ।

फेरि अर्को मांस, महामांसको अर्थ भाषामा यसरी वर्णन गरिएको छ :

तत्वध्यान प्रितिकाऽहारं मांसंचेति तदुच्यते।
आकाशानन्ततत्योगाश्च महामांसन्तु तद्भवेत्॥

अर्थात तत्व ज्ञान उचित चर्य गर्नु, ध्यान गर्नु प्रितिक आहार गर्नुलाई मांस भनिन्छ। तदनुसार आकाश समान निर्मल बोधिचित्तले लगातार ध्यान प्रयोग गर्ने विधिलाई महामांस भनिने कुरा सान्ध्य भाषामा उल्लेख छ। यसकारण बोधिचित्तले ध्यानाहार गरी बस्ने विधिलाई महामांस भनिन्छ।

## मद्य प्रयोग गर्ने समय सिद्धि

इदं तं नारिकेंवारि समयादि क्रमाद्ददेत्।
समय. रक्षणासिद्धि पिव वज्रामृतोदकम्॥

यो नरिवलको जल लिएर समयादि समयसिद्धि र रक्षणासिद्धिको क्रम विधि प्रयोग गरी दिनुपर्दछ। यसको भावार्थ नारिकेल जललाई बज्रोदक भनिन्छ।

(मांस) पक्वाम्र पनसः द्राक्षा: (मद्यं) नारिकेलोदकस्य:
नानाफल विचित्रं वै स्थापयेत् गण मण्डले ॥

मांस भनेको पाकेको फलफूल आँप, ओखर, दाख, अनेक फल आदि हो। मद्य भनेको नारिकेलोदक आदि (नरिवलको पानी) र कंकोल रस राखेर गणमण्डलमा गुरुमण्डल समाधि विधि चर्ये प्रयोग गरी दिनुपर्ने भनिएको छ।

एवं प्रयोगात पुरुषार्थसिद्धिः मनोरथं तै लभते महत्तम् ॥

यस प्रकारले प्रयोग गरिएको फल पुरुषार्थसिद्धि र मनोरथ कामना र ठूलो पुण्य लाभ हुन्छ।

मद्यं मांस विना पुज्यं होम चैव विना धृतम ॥
सद्गुरुं च विनासिद्धः : विना धर्मेण मुक्तिम् ॥

मद्य भनेको उपरोक्त नारिकेलोदक र मांस भनेको फलफूल राखेर पूजा नगर्नु, घिउ राखेर पूजा यज्ञ होम नगर्नु (गाईको घिउको बत्ती नराखि यज्ञ गर्नु) उत्तम पुण्य लाभ हुँदैन। त्यसैगरी सद्गुरुको आज्ञा अनुसार पूजा नगर्नु पनि सिद्धिफल प्राप्त हुँदैन। उत्तम धर्म विना मुक्ति (मोक्ष) लाभ हुँदैन।

यस प्रकारले उपरोक्त भावार्थ गरी सिद्धि फलदायक विधिलाई उलंघन गरी अनर्थ किसिमले प्रयोग गर्नु मूलापत्ती प्रयोग भएको समान हुन्छ भन्ने कुरा तथागत गुह्यक सूत्रमा उल्लेख छ।

पितर मातर शब्द ज्ञान धारण गर्ने सान्ध्य भाषा वाक्य यसरी प्रयोग भएको बुद्धोपदेश छ :

पितर हन्ति, मातरं कामयेत। यसको भावार्थ यसरी बताइएको छ :

पितर हन्ति = कलेश समूहान् देछयन्ति इतयर्थः।

पितरं क्लेश उपकलेश सबै समूहलाई। हन्ति : नाश गर्दछ। मातरं कामयेत् = चक्षु श्रोत घ्राणजिव्हा काय मनासिं धारयेत इतयर्थ

मातरं= आँखा, नाक, कान, जिभ्रो, शरीर, मन समेतलाई मातर भनिन्छ।

कामयेत= यस्तो मातर स्वरुप पञ्चेन्द्रीय धारण गरी त्यसको पछाडि आउने धर्म शब्द, धर्मरुप, धर्मरस, धर्मस्पर्श र धर्मगन्धाको पुण्य रुप ग्रहण गरी पुण्यफल आश्वादन गर्नु बोधिज्ञान लाभ होस् भनी कामना गरिएको हो ।

यस किसिमको भावार्थ बुझेर चर्या गर्नु पर्दछ भन्ने तथागत गुह्यक सूत्र र तन्त्रयानमा उल्लेख भएको छ । यस्तो तत्वज्ञान बुझेर बुद्धयान चर्य बुद्धकार्य सफल गर्न सक्ने बोधिसत्व महासत्व हुनसक्दछ ।

फेरि अर्को सान्ध्य भाषा यसरी उल्लेख भएको छ :

मातृ भागिनी पुत्रिश्च कामयेत यस्तु साधक ।
ससिद्धि विपुलां गच्छेत महायानाग्रा धर्मताम ॥१॥
जनयति भण्यते प्रज्ञा जनयति यस्यात् जगज्जनं ।
भगिनीति तथा प्रज्ञा विभागं दर्शयत यत : ॥२॥
दुहित्री भण्यते प्रज्ञा गुणस्य दुहित्रिति निगधते ।
अस्यस्पर्शा भवति यस्मात् डोम्बी तस्मात प्रकश्यते ॥३॥
जप जल्पनमाख्यातं आलि कालि प्रजल्पनात् ।
इति बोधिचित्तोतपाद भावनादिकं ॥

यसको भावार्थ अति नै गंभीर छ । माथि उल्लेखित श्लोकको भावार्थ यसरी बताइएको छ : मातृ=माता । भागिनी=वहिनी । पुत्री=छोरी । यी तीनजनालाई साधकले धर्म संझने महायानको अग्रणी भइरहेका भनेर स्मरण गरी सम्मान गरी रहन्छ । त्यो साधकलाई ठूलो सिद्धि लाभ हुन्छ ॥१॥ मातृ भगिनी पुत्रीलाई महायानको अग्रणी किन भनियो भने जननी (मातृ) भनेको प्रज्ञा भनी जान्नु पर्दछ । त्यस्तै (भगिनी) वहिनीलाई प्रज्ञा भनी चिन्नु पर्दछ । फेरि छोरी (पुत्री)लाई पनि प्रज्ञा भनी चिन्नु पर्दछ । किनभने यस्ती मातृ भगिनी पुत्री (दुहित्री) प्रज्ञाको विभागमा गुणवर्णन गरिएको छ ॥२॥ यसरी नै प्रज्ञाको गुण स्पर्श भइरहेको कारणले उनीहरुलाई डोम्बी जगतको आमा हुन आउने भनी प्रख्यान्त गरिएको छ ॥३॥

यही बोधिचित्तोत्पाद गर्ने भावनादी प्रकरण हो भनी बुझ्नु पर्दछ। त्यसैले तथागतहरुले मातृ भगिनी पुत्रीलाई महानाग्र धर्मता हुन आएको भनी वर्णन गर्नु भएको छ। यो कुरा तथागत गुह्यक तन्त्रराजमा उल्लेख भएको छ।

फेरि तथागतहरुले कुलपुत्री प्रशंसा गर्नु भएको साधन तन्त्र स्त्री प्रशंसा पत्रमा यसरी वर्णन गरिएको छ :

स्त्रिया : स्वर्ग : स्त्रियो धर्म: स्त्रियमेव परंतप: ।
स्त्रि: बुद्ध: स्त्रिय: संघ: प्रज्ञापारमिता स्त्रिय: ॥

भावार्थ := स्त्री भनेको स्वर्ग हो। स्त्री भनेको धर्म स्वरुप हो। स्त्री भनेको नै ठूलो तप हो। त्यस्तै आइमाईहरु पनि बुद्ध हुन आउनेहरु हो। स्त्री भनेको संघ स्वरुप हो। त्यसैकारण स्त्रीहरु प्रज्ञापारमिता हो। शब्द रुप–स्त्री स्त्रियौ–स्त्रिय: आदि।

यस्तो विवरण भगवान बुद्ध शाक्यमुनि तथागतले साधन तन्त्र उपदेश दिनु हुँदा स्त्री प्रशंसा गर्नुभएको छ। त्यसो भएकोले स्त्री विना तथागत भगवान् बुद्ध हुनुहुने वोधिसत्व अवतरण हुने छैन। यसको हेतु स्त्रीको गर्भाशय कमलको फूल हो। कमलको फूलको तक्ष्यण उत्तम मध्यम अधम पनि देखाइएको छ। उत्तम भइरहेको सुलक्ष्यण सुधर्म र मध्यममा वोधिसत्व उत्पन्न भइरहेको हुन्छ। अधम भइरहेको अन्धकारमा कुलक्ष्यण अधम भई पाप कर्ममा रत भइरहेको हुन्छ।

उत्तम भइरहेको स्त्री पनि राम्रो कुलमा अवतरण हुन्छिन्। बोधिसत्वलाई जन्म दिन्छिन्। सुगति मार्ग देखाउँछिन्। सम्पूर्ण कलेश मल हटाई सकल प्राणीहरुलाई उद्धार गर्ने ज्ञानको आलोक देखाउँछिन्। त्यसैले स्त्री भनेको प्रज्ञापारमिता स्वरुप हो। साधन तन्त्रमा उल्लेख भएको छ।

यसैकारण मायादेवी बुद्ध जननी प्रज्ञादेवी भएको हुनाले तथागत हुनुहुने बोधिसत्व जन्माउनु भएको हो। यही कारण मातृ भगिनी पुत्रीहरुलाई प्रज्ञा भन्ने वर्णन गरिएको छ। यस्तो तत्व ज्ञान बुझेर बुद्धयान चर्य गरी बुद्धकार्य सफल भई बुद्धत्व लाभ हुने अगाडि नजिक पर्न आउँछ। यति ज्ञान स्त्रीको वर्णन हो।

अब पंचातृतको प्रशंसा यहाँ राख्न चाहन्छु। पंचामृतको सान्ध्य भाषा शब्द साधारण मानिसले बुझ्न कठिन हुन्छ। बौद्ध तन्त्र कोश अध्ययन नगरी पंचामृतको सान्ध्य भाषा शब्द नबुझी पंचामृतमा पंचबुद्धात्मकको प्रभाव गाँसिएको छ भन्ने ज्ञानको अभाव भइरहेको छ। त्यसैले पंद्यामृतको सान्ध्य भाषा शब्द बुद्धोपदेश बोध गर्न यसरी मार्गदर्शन भएको छ।

ज्ञानोदय ग्रन्थमा यसरी उल्लेख भएको छ :

शुक्रं रक्तं तथा मांसं विष्मुत्राणि च मक्षणतम्।
धृतं क्षीरं मधु दधि : ऐक्षवं विधिपत क्रमात्॥
एतानि पंचवस्तुनि पंचामृत इति स्मृतम्।
भावयेत परम नित्यं पंचबुद्ध स्वरुपकम्॥

| सान्ध्य भाषा | टीका | अर्थ | पंचबुद्ध स्वरुप |
|---|---|---|---|
| शुक्रं | गोधृत | गाईको घिउ | वैरोचन बुद्ध |
| रक्तं | गोक्षीर | गाईको दूध | अक्ष्योभ्य बुद्ध |
| मांस | मधु | मह | रत्नसंभव बुद्ध |
| विण (विट्) | गोदधि | गाईको दही | अमिताभ बुद्ध |
| मूत्र | ऐक्षव | सखर | अमोघसिद्धि बुद्ध |

पूर्वोक्त पाँच चीजलाई पंचामृत भनिन्छ। यी पाँच चीज राखी विधिपुर्वक पंचबुद्ध स्वरुपले पूजा गरी प्रयोग गरिन्छ। विधिपूर्वक पूजागरी प्रयोग गर्ने गरेमा ठूलो सिद्धि लाभ हुन्छ। पुरुषार्थ प्राप्त हुन्छ। बुद्धत्व लाभ हुने मार्ग नजिक हुन्छ। गुरु बुद्धोपदेश अनुसार विधिपूर्वक पूजा गर्ने पंचामृत सेवन गरेको फल पुरुषार्थ सिद्धि लाभ हुन्छ। यस प्रकारले वर्णन गरिएको छ।

यदि आचार्य अभिषेक नभएकाहरुले पंचामृतलाई पूजा गरी प्रयोग गरेमा सिद्धि फल हुँदैन। किनभने पंचामृतलाई पंचबुद्ध स्वरुपले पूजा गर्ने मंत्राभिषेक नभएकाहरुले पूजा गर्नु निष्फल हुन्छ भन्ने अभिषेक पटमा उल्लेख छ।

यस्तो कार्यविधिबाट मद्यपान प्रयोग गरी सिद्धि लाभ हुँदैन। त्यसैले मध्य बर्जित गरी पूजा गरेमा उत्तमसिद्धि लाभ भई पुरुषार्थ प्राप्त हुन्छ भन्ने बुद्धोपदेशमा उल्लेख भएको छ।

## मध्यपान सेवन त्याज्य

मध्यपानं न सेवेत मद्यं हि विषमुत्कमन्।
नश्यन्ति कुशलाधर्मा : मद्यपान निषेवनात्॥
य: सेवतेसदा मद्यं तस्य बुद्धि असंस्थिता :।
बल बुद्धि न धर्मोस्ति तस्मात् मद्यविबर्जयत॥

मद्य भनेको मुख्य विषय भएकोले मद्यपान सेवन गर्नु हुँदैन। मद्यपानले गरेर कुशल धर्मलाई नाश गर्दछ। जसले सदा मद्यपान गर्दछ त्योसँग बुद्धि हुँदैन। बल, बुद्धिहीन भएर जान्छ। विद्या आर्जन गर्न सक्तैन। धर्महीन हुन्छ। त्यसैले मद्यपान छाड्नु पर्दछ। महायान सूत्रमा यस्तो उल्लेख छ।

चरक संहिता ग्रन्थमा पनि भनिएको छ। मद्यपान गर्नेको अकालमा मृत्यु हुन्छ। आरोग्य लाभ हुँदैन। सँधै अस्वस्थ्य भइरहन्छ। दम रोग यकृत रोग, रक्तचाप, कमलपित्त, न्युमोनिया, रक्तविकार, मस्तिष्क रोग, कमलपित्त, न्युमोनिया, रक्तविकार, मस्तिष्क रोग इत्यादि भयंकर रोग भई छिट्टै आयु क्षिण भएर अकाल मृत्यु हुने कुरा ऋषिमुनिहरुले शास्त्रहरुमा बताएको कुरा आज पनि उत्तिकै ताजा छ। बुद्धिमानीहरुले अध्ययन गरिरहेका छन्।

## पंचाकुश प्रमाण ज्ञानोदय बुद्धोपदेश

प्रथम गोकुद्दहन पंचाकार रुपं अधिमुच्येत् ।
अंकुशादिभि: पंचस्य पंचतत्वानि कारयेत् ।
महांकुशस्य नामानं ज्ञानदेवता इष्टवान ॥
वज्रांकूशस्य अक्षोभ्य : स्थानांकुश रत्नसंभव : ।
राजांकूशा ऽमिताभंच चलांकूशे पंचमाचरेत् ॥

यो बुद्धोपदेशको भावार्थ– पांच अंकूश भइरहेकोलाई पंचतत्वको रुपमा प्रयोग गर्नुपर्दछ। महांकूश भनेको इष्ट ज्ञान देवता वैरोचन बुद्ध । बज्रांकूश अक्षोभ्य बुद्ध । स्थानांकूश रत्नसंभव बुद्ध । राजांकूश अभिताभ बुद्ध । चलांकूश अमोघसिद्धि बुद्ध । यसरी पांच प्रकारको अंकूशलाई पंचाकूश भनिन्छ। यसमा पञ्च ज्ञान पंकाश भइरहेको हुन्छ ।

पंचाकुशको तालिका यस प्रकार छ :

| पंचाकूश | महांकूश | बज्रांकूश | स्थानांकूश | राजांकूश | चलांकूश |
|---|---|---|---|---|---|
| पंचबुद्ध | वैरोचन बुद्ध | अक्षोभ्य बुद्ध | रत्नसंभव बुद्ध | अमिताभ बुद्ध | अमोघ-सिद्धि बुद्ध |
| पंचामृत | गाईको घिउ | गाईको दूध | मह | गाईको दही | सखर |
| पंचज्ञान | सुवि सुद्ध धर्मधातु ज्ञान | आदर्श ज्ञान | समता ज्ञान | प्रतत्यवेक्षणा ज्ञान | कृत्यानु-स्थान ज्ञान |
| पंचतत्व | जलधातु | आकाश-धातु | पृथ्वी धातु | अग्नि धातु | वायुधातु |

बुद्धोपदेश अनुसार माथि भनिएको तालिकाको तरिकाले पंचामृत राखेर प्रयोग गर्नु पंचबुद्धात्मक बोधिचित्त लिन भएर जान सकिने निर्वाणपद हो। अतः पंचाकूशलाई हिंसाकृत प्राणीहरुको मांस प्रयोग गर्नु उत्तमसिद्धि लाभ हुँदैन। त्यसो भएकोले माथि भनिएको बुद्धोपदेश ज्ञान बोध गर्नु पर्दछ। पंचामृत इष्ट देवता पंचबुद्ध भइरहेको छ। यस्तो ज्ञान थाहा पाएर पंचामृत प्रयोग गरी आफैले बोधिचित्तोत्पाद गरी निर्वाण धातुसम्म पुग्नलाई प्रयास गर्नुपर्दछ। पंचामृत भनेको पंचबुद्धको पंचतत्वात्मक सम्पूर्ण प्राणीहरुमा प्रवेश भइरहेको हुन्छ। यस्तो ज्ञान सम्पूर्ण जान्नलाई पंचाकाराभि संवोधिज्ञान बज्रमालायोग अध्ययन गरी हेर्नुपर्दछ। पंचाकाराभि संबोधिज्ञान ग्रन्थ राष्ट्रिय अभिलेखालयमा सुरक्षित छ। ताडपत्रमा लिपि नेवार अक्षरले लेखिएको छ। पत्र संख्या १९९७ छ। ग्रन्थकार भट्ट रत्नाकर। यो पंचतत्वात्मकको संवोधिज्ञान हो।

माथि भनिएको पाँच प्रकारले अंकुशलाई पंचाकूश भनिन्छ।

## यो विशुद्धी ज्ञानोदय पंचामृत, पंचाकूश प्रमाण

विट मुत्र रक्त मांश शुक्र पंचामृतं तथा।
दधि क्षीरं मधु घृतं ऐक्षवं पंचरूपाकम्॥
एतानि पंचवस्तूनि पंचामृत इति स्मृतम्।
पंचाकूश इति ख्यतं वजसतव वचो यथा॥

विट = दधि– गाईको दही। मुत्र = ऐक्षव– सखर। रक्त = दुग्ध– गाईको दूध। शुक्र = धृत–गाईको घिउ। मांस = मधु– मह। यति पाँच प्रकारलाई पंचामृत अथवा पंचाकूश भनि बज्र सत्वको वचन भनिएको छ।

पंचामृतको पर्याय वाचक पंचाकूश भन्ने योग विशुद्धि तन्त्र टीकामा उल्लेख भएको छ। यसको तालिका माथिको तालिकामा देखाइएको छ।

## प्रत्येक बुद्धयानमा आहार

मांक्षिका छर्दि संमिश्रैः विणमुत्राधैश्च भाविते : ॥
पंचप्रदीप संमिश्रं आत्मानं पूजयेत सदा ॥
सिद्धिलाभ्यं भवेत प्रत्येक बुद्धयान तदा बुधे : ॥
आहार एव विज्ञैश्च सेवतेज्यं तथा कृतम् ॥

अर्थ—मछिका छर्दि= पीताम्बर फूल (स्वर्ण गजुर फूल) निना पंचामृतं भावना गरी मिलाउनु पर्दछ। यो खाएर बोधिचित्तलाई नमस्कार गरी पूजाभाव गर्ने। बुद्धिमानहरुले सधैं यो चर्या गरी सिद्धिलाभ गरी प्रत्येक बुद्ध भई जान्छ। त्यसरी नै चर्या गरी जाने प्रत्येक बुद्धयानको आचरणमा आहार भई रहेको सान्ध्य भाषा विज्ञहरुले सेवन गरी रहन्छ। विण् मुत्राधै : आदि= विण् मुत्र रक्त मांस शुक्र यति पाँच राखिने पंचामृतको भाग सान्ध्य भाषा शव्द उल्लेख भएको छ।

### गुह्यसिद्धि संग्रह
## पंचपात्र विवेचना

मृण्मयं कूर्मजं चापि शुक्तिजं शंखजं तथा।
नारिकेल वरं श्रेष्ठं तथान्य कांच संभवं।
गोकु ब्रह्म संजातं खपरं पात्र मुच्यते ॥

मृन्मयं = माटाको पात्र अथवा कांसको पात्र, भाँडा। कूर्मज = कापलेको – पीठ पात्र। शुक्तिजं = सिपिको पात्र। शंखजं = शंखको पात्र। नारिकेल पात्र = जटावाल नरिवलको पात्र। सुनको पात्र। अथवा चाँदीको पात्र।

"गोकु दहन संजातं खपरं पात्र मुच्यते" गौ = गाईको पात्र। कुकुट = श्वान खपर पात्र। द = घोंडाको पात्र। हस्ति = हात्तीको पात्र। नर पात्र = मानिसको पात्र। यति पाँच पात्र राख्न उत्तम भरहेका पवित्र शुद्ध। प्राणायाम गरी देह त्याग गर्नेको खपर प्रयोग गर्नुपर्दछ भन्ने उल्लेख छ। यदि अशुद्ध, अपवित्र पात्र प्रयोग गर्नु विघ्न कारक हुन्छ भन्ने चेतावनी दिइएको छ।

त्यसो भएकोले माथि भनिएको कांसको पात्र/सिपिको पात्र/नरिवलको पात्र/चाँदीको पात्र/शंखको पात्र/यस्तो पात्र प्रयोग गरे पनि उत्तम हुन्छ भनिएको छ।

यदी शंखको पात्र नभएमा सिपीको भए दुईवटा प्रगोग गर्नु भनि उल्लेख छ।

पाँचवटा पात्रलाई बज्रधातेश्वरी/रामा/श्यामा/खण्डरोहा देविगणको स्वरुप पंचपीयूष राखेर निधान रुपले पूजा गर्नु पंचपात्र पूजा भनी वाक्य देखाइएको छ।

"पूजा पात्रं च पूर्ण नवरस रुचिरं पंचपीयूष वर्ण"

फेरि नवरसको क्रिया समुच्चये यसरी वर्णन गरिएको छ। श्रृंगार, वीर, वीभत्स, रौद्र, हास्य, भयानक, करुणा, अद्भुत, शान्त यस्तो नवरसलेयुक्त गरी योगाभ्यास गर्ने क्रिया बुझ्नुपर्दछ।

## बौद्ध सान्ध्य भाषा वोध गोदहनको महत्व

कर्णपासिद्धाले रचना गरिराखेको गोकुदहन चर्या गतिको महत्व डाकार्णव तन्त्रमा यसरी टीका उल्लेख गरि राखेको छ।

"गोकुदहन पंचज्ञान स्वरुपमा २ पंचमिको रस पंचशाली पूजिया- - - पंचबुद्धात्मक पंचज्ञान स्वरुपमा - - - ॐ आ हूँ ह्री खं शोधन करित. इत्यादि ॥

गो. गाईको दूध/कु. सखर/द. गाईको दही/ह. गाईको घिउ/न. मह। यति पाँच चीज पंचज्ञान स्वरुप हो। पंचबुद्धात्मक स्वरुप शरीर भइरहेकोलाई संसारमा उद्धार गर्नुहोस्।"

यस किसिमले भावना गरी कर्णपामिद्धा पात्रमा पंचामृत राखेर चर्या गीत गाई पूजा गर्नु डाकार्णव तन्त्रमा भनिएको छ। यस प्रकारले (सकलसिनं) पंचामृत राखेर पूजा गर्ने भनी ज्ञान दिइराखेको छ। फेरि गोकुदहन भनिने उत्तम भइरहेको पाँच जनाको खप्पर पात्र राखेर नियम अनुसारले पूजा गर्नुपर्छ भनिएको छ।

अन्यथा विपरित कार्य भयो कि विघ्न हुन सक्छ पनि भनिएको छ। यस्तो विधि गुह्य अभ्यान्तर पूजा गर्ने विधि सान्ध्य भाषामा देखाइएको छ। पात्र पूजामा मांस (मासु) वर्जित गरिएको छ।

**"अन्यथा सिद्धि हानी नाना विधारोगः जयन्ते"**

यदि अन्यथा भएमा अनेक प्रकारको रोग भई दुःख भोग्नु पर्दछ भन्ने कुरा बुद्धोपदेशमा उल्लेख भएको छ।

## मांसाहुति

मांसाहुति गर्ने विधि सम्बरोदयमा बुद्धोपदेश पंचप्राण शुद्ध विधि यस प्रकार दिइएको छ।

> शुक्रं विट् खदिरं रक्तं जम्बीर सहितस्तथा।
> *मध्ये पूर्वे दक्षिणे च पश्चिमे स्थापितोत्तरे॥*
> पंचबुद्ध स्वरूपेण पूजित्वा गृहितं बुधै।
> मांसाहुति ददेत् पंचवस्तु प्राण विशुद्धितम्॥

यो सान्ध्य भाषा श्लोकमा यसरी भावार्थ दिइएको छ :

शुक्रं = गोघृत/ विट् = गोदधि/ खदिर = रक्तखयर/ जम्वीर = अमिलो वा ज्यामिर। यती पाँच मिलाएर जज्ञ
*(यज्ञ) होम गर्ने विधिलाई मांसाहुतिलाई पंचप्राण शुद्ध विधि पनि भनिएको छ।*

तालिका विधि :

| दिशा | पंचबस्तु | पंचप्राण शुद्ध हुनु | पंचबुद्ध स्वरुप |
|---|---|---|---|
| मध्य | गाईको दूध | प्राणवायु शुद्ध हुनु | अक्षोभ्यबुद्ध स्वरुप |
| पूर्वमा | गाईको दही | उदानवायु शुद्ध हुनु | वैरोचनबुद्ध स्वरुप |
| दक्षिणमा | गाईको घिउ | समानवायु शुद्ध हुनु | रत्नसंभबुद्ध स्वरुप |
| पश्चिममा | तरुल | अमानवायु शुद्ध हुनु | अमिताभबुद्ध स्वरुप |
| उत्तरमा | ज्यामिर | व्यानवायु शुद्ध हुनु | अमोघसिद्धिबुद्ध स्वरुप |

उपरोक्त माथि भनिएको पाँच चीज राखी पंचबुद्ध स्वरुप गरि मिलाएर १०८ टुक्रा थला जप गरी जज्ञे (यज्ञ) होम गर्नु मांसाहुति भनिएको छ। उपरोक्त प्रकारले जज्ञ गरेको पुन्य पाँच प्राण वायु एक ठाउँमा संलग्न भई रहेको बोधिचित्त निर्वाण धातुमा पुगिने सिद्धि हुन्छ। यो कुरा सम्वर तन्त्र जज्ञ पटरममा उल्लेख भएकोछ। यो मांसाहुति विधि अनुसन्धान गर्दा परिश्रमले मात्र प्राप्त भऐको हो। यो माथि भनिएको विधि सान्ध्य भाषामा उल्लेख भएको छ।

सान्ध्य भाषा भावार्थ बोध भएमा बुद्धोपदेश अनुसार ठीक हुन आउँछ। वर्तमानमा कतिपयले १०८ टुक्रा काँचो मासु राखेर मांसाहुति भनि जज्ञे गर्ने गरेका छन्। यस्तो काँचो मासु १०८ टुक्रा राख्ने कार्य बुद्धोपदेश विपरित हुन्छ। सान्ध्य भाषा विज्ञहरुले भनिरहेका छन्।

फेरि चराको मासु, तित्राको मासु राख्नु पर्दछ भन्ने विषय सान्ध्य भाषामा यसरी भनिएको छ :

लवणेन वनचर रुपं मृग: ।
तैलेन आकाशचर रुपं तित्तर: ॥

यसको भावार्थ टीका अनुसार नुन भनेको वनचर रुपमृग हो। तेल भनेको आकाशचर रुप तित्रा चरा स्वरुप हो।

वनचर मृगको पर्यायवाचक लवण - नुन ।
आकाशचर तित्राको पर्यायवाचक तैल - तेल ।

यस्तो पर्यायवाची चीज लिएर मृग र तित्रा चरालाई नगरी लवण र तैल लिएर प्रयोग गर्नु पर्दछ । चराको मासु, तित्राको मासु अत्यावश्यक भनी प्रयोग हुँदै आएको बुद्धोपदेशलाई व्यंग्य गरिरहेको समान भएर भ्रान्ति व्यवहारले संबृत्ति धर्म प्रयोग भईरहेको छ। परमार्थ धर्म स्पर्श नभएको व्यवहार भईरहेको छ। संवृति धर्म भनेको संसारमा विपाक भोगगरी घुमिरहनु हो ।

परमार्थ धर्म भनेको संसारमा भोग गर्न नपर्ने, छिटै तरिने धर्म हो। त्यसो भएकोले परमार्थ धर्मको बाटो जाने इच्छा भएमा चराको मासु स्वरुपले नुन ग्रहण गर्नु र तित्राको मासु स्वरुपले तेल ग्रहण गर्नु उचित हुन्छ भन्ने कुरा चक्रसम्बर भगवानले बज्रदेवीलाई भन्नु भएको हो भनी सम्बर तन्त्रमा उल्लेख छ। यस्तो ज्ञान सान्ध्य भाषा नबुझेर भ्रान्तिपथमा मिथ्या व्यवहार भइरहेको छ। कलियुगमा मिथ्या ज्ञानमा बस्ने बौद्धहरुलाई यो चेतावनी दिइ रहेको छ।

बौद्धमितिखं घोषं मिथ्या ज्ञानेन पूज्यते ।
तेयान्ति परमं घोरं निरये च्युतिगच्छति ॥

बौद्ध हुँ भन्नेहरुले उत्तम कार्यलाई विपरित शव्दले (खरलाक) गरी मिथ्या ज्ञानमा धर्मावलम्बी भई उल्टो मिथ्या धर्म गरिरहन्छ। मिथ्या ज्ञान लिएर उत्तम धर्मलाई आक्षपगरी अभिमानी भई मिथ्या धर्मलाई पूजा गरिरहनेहरुको मृत्यु हुदाँ घोर भयंकर भई कहिले पनि सुख हुँदैन। नरकमा च्युत हुन्छ भनी यो श्लोक बुद्धोपदेशमा भनिएको छ।

संबृत्ति धर्म सबै मिथ्या ज्ञानमा आधारित लौकिक धर्म हो।

परमार्थ धर्म उत्तम बोधिज्ञान लाभ हुने सत्य धर्म अलौकिक धर्म हो।

संपूर्ण प्राणीहरु तीन गुणमा आसक्त भई रहेको छ।

१) सत्वगुण - राम्रो उत्तम कुशल मुलमा धर्म पालन गरी सबैसग समान भई मैत्रीकरुणा मुदिता उपेक्षा पालन गरी शान्त साधुभई बस्ने इहलोक र परलोकमा सुखी भईबस्दछ।
२) रजोगुण - धर्म गर्ने भनी लौकिक धर्ममा लागेर मैले धरै धर्म गरी सकें भनी मनमा लिइ बस्दछ। त्यस्ता मानिसमा दान शीत क्षान्ति धर्म नभएर तत्वज्ञान नहुने भई तृष्णा धेरै भइरहन्छ। त्यस्ता मानिस संधै दुःखी हुन्छ।
३) तमोगुण - सत्य धर्मलाई विश्वास नगर्ने। उकोहोरो धर्ममा लागि रहने। मिथ्या ज्ञानमा विश्वास गर्ने। दुर्जन स्वभाव भएका, अभिमानी, जडंग रिसाई परुषवाक गर्ने, सज्जन साधुहरुलाई अपबाद गरी दागा धर्ने क्लेश, उपवन्लेशले लिप्त भइरहने र संबृत्ति धर्ममा लागिरहनेसंग तमोगुणी भनिन्छ। त्यस्तो अनन्त कर्मफल विपाकले संधै दुःखी भईरहन्छ। यस प्रकारले सम्पूर्ण प्राणीहरु तीन गुण धर्ममा लागिरहेकोछ।

## त्रिगुण नाडी

सम्पूर्ण प्राणीहरुमा त्रिगुण नाडीको स्वभाव लिप्त भइरहेको हुन्छ।
१) सत्वगुण नाडी २) रजोगुण नाडी ३) तमोगुण नाडी।
सत्वगुण नाडी - सत्वगुणको स्वभाव भइरहन्छ। यो उत्तम हो।
रजोगुण नाडी - रजोगुणको स्वभाव भइरहन्छ। यो मध्यम हो।
तमोगुण नाडी - तमोगुणको स्वभाव भइरहन्छ। यो अधम हो।

यस्तो त्रिगुण नाडीको स्वभाव तीन गुणमा आसक्त भइरने वताइएको छ।

यस्तो त्रिगुण नाडीको तीन स्वभाव भइरहेकोलाई सत्वगुणमा एकाकार गरी दिने ज्ञान धातुको काम हो। ज्ञानधातु परिचय गरिलिन बोधिचित्त धारण गर्नु पदर्छ। वोधिचित्त धारण गर्ने कार्य प्राणीहरुको त्रि दुःख गर्न सकियोस भनी प्रज्ञा उपाय करुणा पालन गर्नु बुद्धयानको अनन्त ज्ञान थाहा पाउनु पर्ने हुन्छ।

त्रि दुःख शमनस्त्र्यन्तो नन्तस्त्रिमुक्तिगः ।
सर्वावरण निर्मुक्त आकाश समतातः ॥

नामसंगिती नाम मन्त्रार्थावलोकितेनी टीकामा यस्तो उल्लेख भएको छ :

त्रि दुःख भनेको तीन प्रकारको दुःख छ ।
आध्यात्मिक दुःख = आफ्नो शरीरमा भएको षट् इन्द्रियको प्राकृतिक स्वभावले उत्पत्ति भई आउने दुःख ।
आधि भौतिक दुःख = पंच महाभूत पृथ्वी, जल, तेज, वायु र आकाशको तत्वद्वारले उत्पन्न भई आउने पीडा दुःख उत्पन्न हुने दुःख ।

आधि दैविक दुःख = आफ्नो पूर्वजन्ममा गरेको कर्म विपाकको फलले उत्पन्न भई आउने दुःख यस्तो तीन प्रकार दुःख शान्त गर्ने प्रज्ञा उपाय करुणा हो । प्रज्ञा उपाय करुणा तीन स्वभाव छ । तीनै उत्तम स्वभाव यस किसिमले बताइएको:

प्रज्ञा स्वभाव = सप्रत्रिंशत बोधिपाक्षिक धर्म बुझ्नु । उपाय स्वभाव = चतुर्ब्रम्ह विहार पालन गर्नु । करुणा स्वभाव = बोधिचित्त धारणा गर्नु धर्म चिन्नु हो ।

सँधै बोधिचित्तलाई नमस्कार गरी बस्नु । यस्तो प्रज्ञा उपाय करुणा स्वभावले त्रिदुःख शान्त गर्नुलाई त्रिमुक्ति भनिन्छ । माथि भनिएको तीन दुःख असह्य भइरहेको संसारमा घर बसी प्राणीजगतलाई दुःखमा उद्धार गर्न सकियोस् भनी मित्रभाव राखि बस्नु मैत्री धर्म हो ।

तीन प्रकार त्रिदुःखले पीडित प्राणीहरुलाई पार लगाउन सकियोस् भनी मनमा चिताउनु करुणा धर्म हो ।

पुण्यको हाँगा उत्पत्ति गरी प्राणीहरुलाई सुखी तुल्याउन पाएको देखेर खुशी भई बस्नु मुदिता धर्म हो ।

कसैलाई पनि भेदभाव नगर्नू। जस्तो कि यो गरीव, यो धनी भनेर भेदभाव गरी गरीबलाई अवहेलना गरी मन रुवाउनु, धनिलाइं हर्षित तुल्याउनु, धनी अभिमानीलाई मात्र प्रेम गरी बस्नु र यो शत्रु मित्र भनी भेदभाव गरी बस्ने चित्त नभई सबैलाई समान भाव राखी बस्नु उपेक्षा भाव हो।
यती चार चतुर्ब्रह्म विहार पालन गरी बस्तुलाई अनन्त ज्ञान भनिन्छ। यस्तो अनन्त ज्ञानले मात्र तीनवटा दुःख शान्त भएर जान्छ।

**सर्वावरणमा निमुक्ति** = सम्पूर्ण क्लेश उपक्लेशले आफ्नो चित्तलाई आवरण भई रहेको हटाई बोधिचित्त आकाश समान निर्मल भई विमलचित्त (मलरहित चित्त) गरी बस्ने अंगलाई त्रिमुक्तिः भनिन्छ। सान्ध्य भाषामा अनन्तज्ञान लाभ गर्ने धेरै कुराहरु भनिएको छ। अनन्त ज्ञान लाभ गर्न सर्बज्ञ हुन सक्नु पर्दछ। मुख्य नव ग्रन्थ बौद्ध महायान सूत्र सबै धारण गरी स्मृतिवान बुद्धिमान धर्म भाणक बोधिसत्व महासत्व हुन सक्ने सर्वज्ञ हुन्छ। बोधिको अर्थ बुद्धत्व। सत्वको अर्थ प्राणी। बोधिसत्व भनेको वुद्धत्व लाभ गर्ने प्राणी। बोधिसत्व प्राप्त गर्ने सर्बज्ञ भइरहन्छ।

**सान्ध्य भाषाको भावार्थ :**

| **उपाय स्वरुप** | **प्रज्ञा स्वरुप** |
|---|---|
| पुरुष वाचक | स्त्री वाचक |
| वसन्त - हेवज्र | तिलका बज्रवाराही |
| सुर | पानया |
| चक्रसंवर | वज्रबाराहीयोगिनी |
| वुद्ध | यशोधरा |
| हेरुक | नेरात्मा देवी |
| चण्डामहारोषण | द्वेषवज्री |

यम प्रकारले पुरुष देवनालाई सुरशब्द र देवीगणलाई पानया स्त्री शब्दको अनुरुप टीका देखाइएको हेर्दा महज स्वरुप भई रहेको सुरपानया: प्रज्ञोपाय भईरहेको वसन्ततिलका ग्रन्थमा पनि उल्लेख भएको छ। अत: सुरपनया शब्दलाई सुरपान भन्नु उचित देखिँदैन। सुर-पानया दुईवटा शब्द छ भनी टीकामा भनिएको छ।

## पंचप्रदीप र पंचकूशको सान्ध्य भाषा :

महायान वौद्ध ग्रन्थमा सान्ध्य भाषा शब्द आउँदा एकोहोरो भई सोझो अर्थ गरी प्रयोग गर्नुलाई तमोगुण धर्म भन्ने संज्ञा दिइएको छ। त्यसैले तमोगुण धर्ममा प्रवेश गर्न नपरोस् भन्ने

उद्देश्यले सान्ध्य भाषाको भावार्थ यसरी देखाइएको छ :

| **पंचप्रदीको सान्ध्य भाषा :** | **भावार्थ** |
|---|---|
| गो = गोमांस = दधि = | गाईको दही |
| कु = कुक्कटमांस = खण्डमधुर = | सखर |
| द = अश्वमांस = दुग्ध = | गाईको दूध |
| ह = हस्तिमांस = धृतं = | गाईको घिउ |
| न = नरमांस = मधु = | मह |

उपरोक्त पाँच मासको अर्थ = पंचामृत

| **पंचाकुशहको सान्ध्य भाषा :** | **भावार्थ** |
|---|---|
| विट = बज्रांकूश = दधि = | गाईको दही |
| मूत्र = चलांकूश = खण्ड मधुर = | सखर |
| रक्त = राजाकूश = दुग्ध = | गाईको दूध |
| शुक्र = महांकूश = घृतं = | गाईको घिउ |
| मज्जामांस = स्थानांकूश = मधु = | मह |

यति पाँचलाई पंचाकूश भनिन्छ।

(एतानि पंचवस्तुनि पंचामृत इतिस्मृतम्)
यस्तो पाँच प्रकारको चीजलाई पंचप्रदीप, पंचामृत भनिन्छ।
(एतानि पंचवस्तुनि पंचामृत इतिस्मृतम्)
यस्तो पाँच प्रकारको चीजलाई पंचप्रदीप, पंचामृत भनिन्छ।

## यज्ञ होमार्चन विधि

यज्ञ होम विधि विषय यहाँ प्रस्तुत छ :
बुद्धोपदेश तन्त्रमा भएको होमार्चन विधि विधानमा सान्ध्य भाषा शब्दमा आउने ज्ञानतत्व ज्ञानले बोधगरी हेर्नु विचारणीय छ। यज्ञ होम गर्दा अनेक प्रकारको विधि आउँछ।

नराहुति, शिराहुति, मांसाहुति, नर मांसाहुति इत्यादि प्रकार छ। यो अलग प्रकारको यज्ञ क्रियाविधि देखाइएको छ। विश्व शान्तिको लागि उक्त यज्ञ होम गर्नु यज्ञ निर्णयमा उल्लेख गरिएको छ।

आचार्य अभिषेक प्राप्त बज्राचार्यहरुले देशमा बिघ्न हुन नदिन शान्ति गरिने यज्ञ होमार्चन एउटा विधि घृताहुती, अष्टदशी, आहुति, बृहिधान्यादि आहुति, अग्निप्रथमाहुति, ज्ञानाहुति, देवताहुति, यज्ञौषधी आहुति, पूर्णहुति र शेषाहुति यति नियमानुसार होमक्रिया विधि प्रचलित भईरहेको यज्ञ होमार्चन विधि पनि नियमानुसारले गरिने गरिएको छ।

तर माथि देखाइएको नराहुति भनिने सान्ध्य भाषा हो। ब्राह्मणवादी शैव धर्मावलम्बी तीर्थकहरुले अर्थ लगाउँदा नरको अर्थ मानिस हुनेगरी नराहुति गर्ने र गर्दै आएको इतिहास साक्षी छ।

बौद्ध इतिहासमा यस्तो भनिएको छ – त्रेतायुगमा क्रकुच्छन्द बुद्धको पर्याय रत्नकोशवती देशको राजा रत्नकेतुले तीर्थक ब्राह्मणहरुको उपदेश सुनेर नराहुति १०८ केटाकेटी राख्ने कार्यक्रम गरी नराहुति यज्ञ गर्दा अकस्मात अग्निदेवता कोप भई यज्ञ बिघ्न भयो। हाहाकार भई रोग व्याधी उत्पन्न भयो। यस्तो अवस्थामा कमरुणिक भगवान बुद्ध क्रकुच्छन्द तथागतले सुदृष्टिले हेर्नु भयो। यज्ञ होम नराहुतिमा बांकी भएको एउटा बालक आश्चर्य भई घुम्न हिड्यो। क्रकुच्छन्द बुद्धको अगाडि पुग्यो। उहाँ क्रकुच्छन्द बुद्धले त्यो बालकलाई उपदेश दिनुभयो। हे बालक ! तिमीलाई सर्वज्ञ मित्रपादाचार्य भनी नामाकरण गर्दछु। तिमीलाई आचार्य अभिषेक दिन्छु। तिमी रत्नकोशवती देशको राजा रत्नकेतुले नराहुति गरेको यज्ञमा विघ्न भएकोलाई शान्त गर्न जाउ। तिमीलाई म असल कुशलमूल उपदेश दिन्छु भनी आचार्य अभिषेक दिनुभयो। आचार्य अभिषेक दिइसकेपछि नराहुति यज्ञ बिघ्न भएको शान्त गर्न १०८ जुही फूल आहुति गर्ने विधि सिकाउनु भयो। त्यो सर्वज्ञ मित्रपादाचार्यले क्रकुच्छन्द बुद्धको उपदेश सुनी सकेपछि रत्नकेतु राजाको अगाडि गई सान्त्वना दियो।

हे राजन ! धन्दा नमान्नुहोस्। यज्ञ विघ्न भएको म शान्त गरी दिन्छु। मैले भने झैं नराहुति यज्ञ गर्नुपर्दछ। केटाकेटी होम नगरी असल रुपले होम गरौं। विघ्न भएको शान्त भएर जान्छ। तपाई महाराजलाई जय हुन्छ। भनी परामर्श दिंदा रत्नकेतु राजाले हर्षित भई भन्यो – हे वालक ! तिमीले भने जस्तै के-के चाहिन्छ ? सारदाम सबै पूरा गर्न तिमी आफैं काम गर। चाहिने सबै खर्च दिन्छु। यति भनी चाहिने सबै खर्च दियो र सर्वज्ञ मित्रपादाचार्य बालकले नराहुतिको सारदाम पूर्णगरी राजा रत्नकेतुलाई जजमान गरी यज्ञ आरम्भ गऱ्यो। १०८ जुही फूल विधिपूर्वक होम गरी अग्नि देवताले खुशी भई दर्शन दिए। राम्रो आशीरवाद दिएर अग्नि देवता अन्तरध्यान हुनुभयो। नराहुति यज्ञ सिद्ध भई सर्वत्र शान्त भयो।

यस्तो अद्भुतपूर्व कथा स्व. पं. वैद्य आशाकाजी वज्राचार्यले ने. सं. १०५९ मा ह:बाहालमा र १९६० ह:खा टोलमा १०६४ च्वास: टोलमा पनि बताईसक्नु भएको छ।

फेरि शिराहुति भनेको पनि नरिवलको शिर (टाउको) बनाएर चतुष्कावरण दोषले लिप्त भएको शिरलाई परमतत्व स्वभावको सिद्धिद्वारा नियमपूर्ण गरी शिराहुति यज्ञ होमांचन गरे मात्र मनोवाञ्छापूर्ण हुने सिद्धि लाभ हुन्छ। अन्यथा ब्रम्हाको शिर बनाउने भनी विपरित कार्य भएमा असिद्धि भएर जान्छ। यज्ञ पटलमा यस्तो कुरा लेखिएको छ।

चतुष्कावरण भनेको कायावरण, वागावरण, चिन्तावरण र व्रह्यप्रवृत्ती आवरण भएको ल्केश व्याप्त रुप नरिवलको टाउको भष्म गर्नुलाई शिराहुति भन्दछ। यस्तो सान्ध्य भाषाको भावार्थ वोध गरी होम यज्ञ गर्नु बिश्व शान्ति हुने कार्य हो। आफू एकजनाकोमात्र जय हुने होइन।

फेरि नरमांसाहुति भनेको पनि यज्ञ गर्ने विधि छ। नरमांसको अर्थ मान्छेको मासु भनि राखिने होइन। सान्ध्य भाषा शव्दमा नरमांसको अर्थ त्रिफला अर्थात हर्रो, बर्रो, अम्बा तीन चीजलाई भनिन्छ। त्यस्तै नियमपूर्ण गरी त्रिफला राखेर नियमानुसार नराहुति होम गर्ने विधिले देशमा हुने बिघ्न शान्त गर्नलाई नरमांसाहुति पनि गरिएको इतिहास छ। तर नरमांसाहुति गर्दा मानिसको मासु राखी होम गरियो भने अग्निदेवता कोप भएर विघ्न हुन्छ। त्यसैकारण पण्डित भनाएर बस्नेहरुले सन्ध्या भाष्य भावार्थ राम्रोसंग विचार गरी चर्या गरेर जानु परम कर्तव्य हो। यस्तो तत्वज्ञान बुझ्नेहरुले उल्लेख गरिगएका अनुसन्धान अन्वेषणगरी हेरेमा आफै साधु हुन सक्ने हुन्छ यज्ञ निर्णय ग्रन्थमा उल्लेख भएकोछ।

वर्तमानकालमा यस्तो सान्ध्य भाषाको अनुसन्धान अन्वेषण गरी क्रियाविधि असल कुशलमुल गर्नु उपदेश दिएमा विपरित ढंगले जवाफ दिई खरवाक गरी अपवाद गर्दछ। र असल काम नगर्ने अनुभव हुन थालेको छ।

आफू एक्लैले अमल काम अनुमन्धान र अन्वेषण गरी क्रियाविधि असल कुशलमुल गर्नुपर्ने उपदेश दिएमा विपरित ढंगले जवाफ दिई खरवाक गरी अपवाद गर्दछ।

असल काम नगर्ने अनुभव हुन थालेको छ। आफू एक्लैले असल काम अनुसन्धान र अन्वेषण गरी उत्तम सत्वगुणात्मक बृद्धि गर्ने काम देखाएर वा असल कुरा बताए पनि सन्तोषजनक काम नदिएकोले दुःख लाग्दछ। आजकल मानिसले त्रिगुणात्मक रहस्य कसैले पनि बुझ्दैन। वुझ्ने कोशिश पनि गर्दैन। त्रिगुणात्मक रहस्यविज्ञ भई वस्नेलाई श्रद्धाआदर पनि गर्दैनन्। विचरा असहाय भई कल्याणमित्र संझेर वस्दछ।

त्यसपछि बुद्धयानको अन्वेषण गर्ने संवन्धमा घ्यान दिएर बौद्ध ग्रन्थ अध्ययन गरिदैछ। बुद्धयानमा यस्तो सान्ध्य भाषा आउँछ। सद्धर्मपुण्डरिकमा बुद्धयान बुद्धयानलाई गोरथ, मृगरथ, अजरथ भन्ने तीनवटा सान्ध्य भाषा आउँछ। यस्तो तीन रथ के कारण कस्तोलाई कस्तो प्रकारले प्रयोग गरी बुद्धयानको उपाय कौशल्य ज्ञान कसरी प्रयोग गरियो? बुद्धले तीन यान भनिनेलाई गोरथ, मृगरथ, अजरथ भनी के कारणले आज्ञा गर्नु भयो? बुद्धयानको तीन तहलाई शंका उपशंका गरी मतभेद प्रकट गर्नेहरु बौद्ध तीर्थकहरुको अभिमान चूर्ण गर्न उदाहरण समेत दिनुभएको सद्धर्मपुण्डरिक बौद्ध ग्रन्थ नेपाल भाषा सहित प्रकाश भएको छ। तथापि वौद्ध तीर्थकहरुले सद्धर्मपुण्डरिकमा भएको उपाय कौशल्य ज्ञानको तीन तहको एउटै भएको महायानलाई मान्यता नदिएको विभिन्न पत्रपत्रिकामा प्रकाशित छ। त्यस्ताहरुले पनि त्रिगुणात्मकको रहस्य जानेको छैन। यो त्रिगुणात्मकको रहस्य नजान्नेहरुलाई स्वर्णकेतु अवदान प्रकाशगरी सुनाउनु बुद्धको प्रभाव साकार भई बुद्ध क्षेत्रमा बस्ने प्राणीहरुलाई उद्धार गर्ने महायान चर्यको बल पारमिता बुद्धको रश्मिद्वारा वर्तमानकाल सम्म उज्ज्वल भईरहेको यो बुद्धोपदेश अनुसार प्राणीहरुलाई उद्धार गर्ने का[illegible]ने एकपिण्ड श्राद्ध, लीन श्राद्ध (डेढ महिना त्रिपाक्षिक श्रद्धा), माम्व[illegible] श्राद्ध गर्नुमा महायान परम्परा कुलधर्मास्थिर भईरहेको छ।

श्राद्ध गर्नु महायान बुद्धपरम्परा कुलधर्म बुद्धयान चर्या हो। आफ्नो माता पिता हुन आउने जन्मदाता, जनकलाई पुत्रहरुले सुखावती भुवनमा बास दिने र निर्वाण मार्गमा राखि अन्त्यमा निर्वाण चक्र भुवनमा पठाई उद्धार गर्नु मनुष्य जन्मको सारतत्व बुद्ध धर्म हो। यो माहयान कुलधर्म हो। यस्तो कुलधर्म फेरि पछि मनुष्य जन्म लिंदा निर्माण मार्ग मोक्षगति लाभ गर्ने वुद्धत्व पद लाभ हुन्छ।

त्यस्तै आफू पनि दिवंगत भई जांदा आफ्नो पुत्रले महायान कुलधर्म श्राद्ध गरी मायालोकबाट पार तरेर सुखावती भुवनमा पठाउने बौद्ध परम्परा कुलधर्म संचालन गर्न पनि पुत्रहरुको कर्तव्य हो। जहाँसम्म वुद्धत्व लाभ हुन सक्तैन। त्यसवेला सम्म पुत्रहरुले महायान कुलधर्म संचालन गरी आमा बावुलाई उद्धार गरिरहने क्रिया संस्कार चलिरहने हुन्छ। यस्तो क्रिया संस्कारलाई अनावस्यक क्रिया भनी कुलधर्मलाई दान अन्तराय गर्नेहरु अधोगतिमा पर्दछ भनी वुद्धले सारीपुत्रलाई वताउनु भयो भन्ने कुरा स्वर्णकेतु अवदानमा उल्लेख छ। यस्तो स्वर्णकेतु अवदान प्रचार गरी प्राणीहरुलाई उद्धार गर्ने कुलधर्म महायान चर्य मेरै बुद्ध धर्म हो। यो मेरो बुद्ध क्षेत्र जबसम्म रही रहन्छ तवसम्म गृहस्थिधर्ममा सदा शुभमंगल कल्यान हुने क्रिया संस्कारस्थिर हुनुपर्दछ। यो कुरा भगवान वुद्धले सर्वत्र घोषणा गर्नुभएको छ।

यसै कारण स्वयम्वरभिषेक लिनुपर्ने स्थिति भई पुत्रपुत्री भई जन्म लिन आउने कुलधर्म हो। त्यसैले पुत्रहरुले आमा बाबुलाई विरोध गरी त्याग गर्नु हुँदैन। आमा बाबुले पनि पुत्रहरुलाई विरोध गरी घरवाट निकाल्नु हुँदैन। त्यो पुत्रलाई लिन पुत्र भनी सम्झेर दया माया करुणा राखेर मैत्री करुणा मुदिता उपेक्षा भन्ने चतुर्ब्रह्म विहार पालन गरी उत्तम वुद्धधर्म ग्रहण गर्नुपर्दछ। त्यसैगरी वुद्धधर्म पालन भईरहेमा मात्र स्त्री जात भइरहनेहरु पछि अन्त्यमा बुद्धत्व पद लाभ हुने कारणले पुरुष भई जन्म लिइ निर्वाण चक्रमा पुगने हुन्छ।

स्त्री जातिहरुमा पुरुष भई जन्म लिएर पछि आमा बाबुको लीनपुत्र भई उपरोक्त प्रकारले आमा बाबुलाई उद्धार गर्ने क्रिया संस्कार गरी जानु लोकोत्तर धर्म लाभ हुन्छ। लोकोत्तरको पन्थ मार्ग छ। सप्त बोध्यंग र आर्यअष्टांगिक मार्ग ममेतनलाई लोकोत्तर र्माग भनिन्छ।

लोकोत्तर मार्गद्वारा बोधिसत्व भई द्वादशभूमि चंक्रमण भई अन्त्यमा सम्यक संबुद्ध लाभ हुने र ज्ञानवती भूमि समेत त्रयोदश भूमि लाभ हुँदा सोप्रतिष्ठित निवार्ण धातुमा पुग्दछ। त्यस वेला निर्वाण हुन्छ। स्त्रीजाति निर्वाण भई जाने यस प्रकारले हुन्छ भनी बुद्धले बज्रयानमार्ग देखाउनु भएको वसन्तलिकाको टीकामा उल्लेख छ।

भगवान बुद्ध पनि पहिले रुपावती स्त्री ज्ञानवती स्त्री भई जन्म लिइसकनु भएको छ। यो कुरा अवदानमा (जातक) उल्लेख भएको छ। उहाँ भगवान बुद्ध स्त्री भई जन्मनु हुँदा लौकिक लोकोत्तर मार्ग लाभ गरी प्रज्ञापारमिता सेवा गरी आउनु भएको पुण्यले पछि पुरुष रुप धर्म धाणक बोधिसत्व महासत्व भई द्वादशभूमि पारगरी ज्ञानवती मण्डलभूमि समेत त्रयोदश भूमिको बोधिसत्व महासत्व भई अन्तिमकालमा सोप्रतिष्ठित निर्वाण धातु भद्रकल्पमा लुम्बिनीमा सिद्धार्थ कुमार भई जन्मनु भयो। उहाँले बुद्धगयामा तपस्या गरी तथागत भगवान बुद्ध शास्ता सम्यकसम्बुद्ध भई सबैलाई धर्मचक्र प्रवर्तन गरी उपदेश दिनु भयो। उहाँको ८० बर्षको उमेरमा कुशिनगरमा महापरिनिर्वाण भयो।

उहाँकी स्त्री यशोधरा पनि अन्तिम स्त्री भई जन्मनु भएको पनि यहाँ सम्म मात्र हो। उहाँ यशोधरा जन्म जन्म सम्म स्त्री भई बोधिसत्वसंग दम्पती भई उत्पन्न हुनुभएको महावस्तु अवदानमा उल्लेख छ।

भगवान बुद्धले यशोधरालाई यस्तो आज्ञा भयो – हे यशोधरे ! तिमी अन्तिम स्त्री भई उत्पन्न हुन आएकी हौ। तिमी अब उप्रान्त अर्को जन्ममा चक्रवर्ती राजा हुन आउने पुरुष हुने छौ। तिमी पहिले लौकिक सिद्धि लाभ गरी अकनिष्ठ भुवन पर्यन्तको अधिपति हुन सक्ने छौ।

तिमी त्यस अघि धर्मभाणक बोधिसत्व महासत्व हुनेछौ। तिमी पहिले लौकिक लोकोत्तर धर्म पारङ्गगत भई आएकी हौ। अब पछि तिमी भद्रलोक धातु उत्पन्न हुँदा रश्मि शतसहस्र परिपूर्ण ध्वज भनी भविष्यवाणी गर्नु भएको कुरा सद्धर्मपुण्डरिकमा उल्लेख छ।

यशोधराले लौकिक लोकोत्तर धर्म पारमिता पूर्णगरी आउनुभएको प्रज्ञापारमिता रक्षाभगवती सूत्रमा उल्लेख छ। त्यसकारण स्त्री जातिले पनि लौकिक लोकोत्तर धर्म पारमिता पूर्ण गर्ने पतिव्रता सती भई लौकिकसिद्धि लाभ गर्न सक्ने अकनिष्ट भुवनको अधिपति हुन सक्ने सर्बतन्त्रराजको मण्डल दर्शन गर्ने दीक्षा लाभ गर्ने अपसर लिनुपर्दछ। यस्तो वुद्धपदेश हेबज्र तन्त्र टीकामा उल्लेख छ।

माथि भनिएको महायान बुद्धधर्म र सान्ध्य भाषाको भावार्थ वोध हुने ज्ञान बौद्ध ग्रन्थमा छिपेको भए पनि त्यसको ज्योति बत्ती समान उज्यालो भईरहेको छ।

यस्तो उज्ज्वल ज्ञान बुद्धिमान विद्वानहरुले मात्र राम्रोसंग देख्न सक्तछ।

## शुभम्

## पञ्चगव्य परिचय र महत्व
## बुद्धोपदेश

**पंचगव्य निर्माण :**

नीलायाश्चैव गोमुत्रं कृष्णयाश्चैव गोमयः ।
ताम्रवर्णा पयश्चैव शुक्लाया सौरभ्रे दधिः ॥
कपिलाया घृतं ग्राह्यं पञ्चगव्यमिति स्मृतम् ।

निलो गाईको मुत्र, हरियो गाईंको गोवर, खैरो गाईंको दूध, सेतो गाईको दही, रातो गाईंको घिउ यति पाँच चीज मिलाएर तयार गरिएकोलाई पञ्चगव्य भनिन्छ ।

**पंचगव्य तौल :**

गोमुत्र पलमेकंच पलार्ध गोमयं तथा ।
क्षीर सप्तपलं ग्राह्यं दधिपश्चपलं तथा ॥
घृतमेकं पलं ग्राह्यं तीर्थेवच तथैवच ।
सर्पि गोमय दध्नाश्च पृथक मिश्रेण मिश्रेयेत ॥

गोमुत्र वपल, (गोम्य) गोवर १/२ पल, गाईंको दूध ७ पल, गाईको दही ५ पल, गाईंको घिउ १ पल, यसमा तीर्थको पानी अलिकति राख्नु अनि यति सबै मिश्रण गर्नु । पञ्चगव्य तयार हुन्छ । यस प्रकारले मिलाउनु बुद्धोपदेश पूर्व कालदेखिको हिसाव हो । यदि अलिकति मात्र चाहिने भए तौल घटाएर राखे पनि हुन्छ भनिएको छ ।

**पञ्चगव्य शोधन मन्त्र धारणी :**

ॐ ॐ ॐ अभोपरि शुद्ध राजाय तथागतयार्हति सम्यक सम्बुद्धाय तद्यथा ॐ शोधय शोधय विशोधय विशोधय सर्वपाप विशोधय समन्तेनाधिरि समन्तेनाधिरि शुद्धसत्व महापद्मे हुँ हुँ हुँ फट् फट् फट् स्वाहा ।

यो धारणी पढेर दुबोले शोधन गर्ने । पञ्चगव्य शुद्ध हुन्छ । शुद्ध पञ्चगव्य गीत गाएर छर्कने वाक्य

गोमुत्र गोमय क्षीरं दधि सर्पि कशोदकम् ।
निर्दिष्टं पञ्चगव्यं च पवित्रं काय शोधनम् ॥

यती पढेर छर्कनु पर्दछ । काय शोधन हुन्छ । यस्तो पवित्र गर्ने कार्यलाई अशुद्ध भनी मनमा लियोकी आफ्नो काय वाक् चित्त अशुद्ध हुन्छ । त्यसैले शुद्ध मनले पंचगव्य स्पर्श गर्नु उत्तम हुन्छ भनिएको छ ।

**पंचगव्य पंच ताराहरुको अंश :**

नील श्यालवर्ण गाई आर्यताराको अंश हो । कृष्णवर्ण गाई पाण्डलादेवीको अंश हो । शुक्लवर्ण गाई लोचनादेवीको अंश हो । श्वेतवर्ण गाई वज्रधात्वीश्वरीको अंश भन्ने तन्त्रमा उल्लेख छ । उहाँहरुको अंश स्वरुप गाईको मुत्र, गोम्य, पय, दधि, घृत पाँचलाई पंचगव्य भनिन्छ ।

**पांच गाईको नाम :**

नन्दा, भद्रा, जया, सौम्या, कपिला भन्ने नामाकरण भई पंच गौ माता भईरहेको छ । पृथ्वीलोकमा उत्पन्न हुनआएकोले महालक्ष्मी पनि भन्दछ । (गो वाय् बाँ चि), अदुवा, चिउरा राखेर कलशको वायाँ राखिनुलाई पंच गो माता भनिन्छ ।

**पंच गो माताको स्तोत्र :**

ॐ नन्दा भद्रा जया सौम्या कपिला च कृपावती ।
प्रसिद्धि च महालक्ष्मी आयु आरोग्य संपदम् ॥

ॐ नन्दा भद्रा जया सौम्या कपिला नाम भएका सवै सवै प्राणीहरुलाई दया राखि कृपावती नाम रहनु भएकी महालक्ष्मी आयु आरोग्य संपद सिद्धि समेत दिनुहुने हो ।

यज्ञ गरिंदा पंचगव्य शोधन गरी यज्ञ शोधन गर्नु र काय शोधन गर्नु अनिवार्य रुपले प्रचलित भइरहेको छ ।

कलियुग उत्पन्न हुदाँ पंच गोमाता अभाव भई कामधेनु गौ एउटा गाई उत्पन्न भएर र कामधेनु गाईको मुत्र, दूध, गोवर, दही, घिउ पाँच चीज राखि पंचगव्य प्रसिद्ध गरीदिएको अशोका वदानमा उल्लेख छ ।

यसरी पंचगव्य गोमुत्र प्रयोग गरेमा घृणा गर्नु हुँदैन । यदि घृणा गरीएमा मूलापत्ति दोषले लिप्त भई आयु क्षीण भईजान्छ । रोग लागेर दुर्गति भोग गर्नु पर्ने उल्लेख छ । पंचगण्य शोधन नगरी कहिले पनि काय शुद्ध हुँदैन ।

अतः पंचगण्य तयार गरी उचित स्थानमा वसी अमोघपरि शुद्धराज तथागतको धारणी सात पटक पढी शोधन गर्नुपर्दछ । सर्वत्र छर्कनु पर्छ । शुद्ध भई रहन्छ । पंचताराहरुको सुदृष्टि लागिरहन्छ । बिघ्न नाश भएर जान्छ । यो कुरा वुद्धउपदेशमा उल्लेख छ ।

**पंचगव्य महत्व :**

पूर्वकालमा अमोघपरि शुद्धराज तथागत उत्पन्न हुनुभएको बेला सम्पूर्ण प्राणीहरुलाई काय, वाक, चित्त शुद्ध गरी उद्धार गर्न पूर्व उल्लेखित पंचगव्यलाई उहाँ तथागतको धारणी सात पटक पढेर शोधन गरी सर्बत्र सिंचन गर्नु पर्दछ। छर्कनु पर्दछ। म सुदृष्टिले हेरिरहन्छु। पंचगव्य स्पर्श हुनाले मात्र पनि सबैको काय, वाक, चित्त शुद्ध पारिदिन्छ। बिघ्न बाधाले भई आउने दुःख जन्म मरण टाढा पारिदिन्छ। बुद्धकार्य गर्न नसक्ने मौका पारी निवार्ण सम्म पुऱ्याइदिन्छ भन्ने उपदेश शाक्य मुनी भगवान बुद्धले सबैलाई बताउनु भएको छ। यो कुरा महायान चर्य विधानमा उल्लेख छ। यस्तो महायान चर्य असंख्य कल्पनायानमा पूर्वकालदेखि प्रचार भई आएको बुद्धोपदेश हो। यो बुद्धोपदेशबाट महायान चर्य अर्हत, प्रत्येक बुद्ध, बुद्ध तथागत पद लाभ हुन्छ।

**पंचगव्य देवी साधन गर्ने विधि :**

मंजुश्री मूल कलपमा भएको बुद्ध उपदेश अनुसार पंचमहा देवी महाशीतवती भगवतीको बायाँ हातमा बज्राकुश छ। वामभुजमा बज्राकुश छ – भन्ने ध्यान वाक्य उल्लेख भएको छ। वज्राकुश भनेको बज्र टुप्पा भएको अंकुश हो। उहाँ भगवती साधन गर्नलाई पंचगव्य प्रयोग गर्न मंजुश्री मूलकल्पमा यस प्रकार उल्लेख भएको छ।

वज्र टुप्पा भएको बज्रांकुश भाव लिएर कूशको एउटा हस्त क्वलाछी प्रमाणले अर्थात एक वित्ता अंकुश बनाइ बज्राकुश आकार गरी पूर्वोक्त विधि अनुसार गरिएको पंचगव्यले पोत्नु पर्दछ। वज्रपाणि स्मरण गरी धुमधाम पूजा गर्नु पर्दछ। १०० बत्ती बाली गर्नु पर्दछ।

द्वितीय प्रहरमा बज्रासन गरी एकचित्त ध्यान गरेपछि फूल, टीका, धूप राखि बुद्ध बोधिसत्वहरुलाई नमस्कार गरी कुशको बज्राकुश समाई महाशीतवती पंचरक्षा भगवतीको मन्त्रले लक्ष्य (लाख) जप गर्नु पर्दछ।

एक लाख जप गरिसकेपछि अर्क रुखको दाउरा राखि यज्ञ गर्नुपर्दछ। बज्रपाणि बोधिसत्वले दर्शन दिंदा महाशीतवी भगवतीले दर्शन दिई मनोरथ कामना पूर्ण हुन्छ। सिद्धि वरदान दिनुहुन्छ भन्ने पंचगव्यको महत्व बुद्धले श्री मंजुश्री मूलकल्पमा वताउनु भएको उल्लेख छ।

बज्रसत्व पाराजिकायमा यस्तो भनिएको छ :

पंचगव्यं शकृत पीत्वा सन्मन्त्राधिष्ठितं शुभम् ।
सर्वपाप विनिर्मुक्तः शुद्धोभवति मानवः ॥

मन्त्र धारणी अधिष्ठान गरी राखेको पंचगव्य दिनहुँ पिउने सेवन गर्नेको सम्पूर्ण पापले मुक्त भई मानव शरीर शुद्ध हुन्छ। यो पापमोचन गर्न प्रायश्चित गर्ने विधि हो भन्ने उल्लेख छ।

हे बज्र तन्त्रमा यस्तो उल्लेख छ :
पंचगव्य प्रयोग गरी चर्या गर्दा सिद्धि लाभ भई संसार दुःख मुक्त हुन्छ।

तारापाराजिकाय यस्तो उल्लेख भएको छ। देव देवीहरुको शरीरमा लगाई राखिएको वस्त्र सहित आगो लागि भष्म हुने विघ्न आउँदा शान्ति गर्न यस्तो भनिएको छ – यदि देवदेवीहरुको मूर्तिमा लगाई राखेको वस्त्र मात्र आगोले डढेको भए आगोले डढेको वस्त्र देवदेवीको मूर्ति बाहिर राखि आगोले खाएको वस्त्र फाली अर्को नयां वस्त्र चढाई विधान अनुसार पूजा गर्नु पर्दछ। वलि दिएको देश वाहिर फालिदिनु। पंचगव्य र कलश पानी छर्केर शुद्ध गर्ने विधि तारापाराजिकामा भनिएको छ।

"वस्त्रादी पूर्ववत स्थाप्य पंतगव्येन सिंचयत्" यस्तो बुद्धोपदेशमा उल्लेख भएको छ ।

बुद्धोक्त संसारामयमा यस्तो उल्लेख छ :

सूतके मृतके वापि प्रमादाद्वति भिक्षुवः ।
तीर्थ व्रतोपवासेन पंचगव्येन शुद्ध्यति ॥

प्रमाद भएका भिक्षुहरु र बालक जन्मदा, घरमा मानिस मर्दा पंचगव्य लिएर मात्र शुद्ध हुन्छ। प्रमाद भएका भिक्षुहरुले व्रत उपवास बसी पंचगव्यले सिंचन गरी शुद्ध हुन्छ। काय शुद्ध गर्ने पंचगव्यले हो ।

महामञ्जुश्री पाराजिकायमा यस्तो उल्लेख छ :

पंचगव्य तथा वस्त्रं तीर्थस्नानं शुचिः भवेत ।
शुचिस्यात् मातृ वन्धुनां त्रिरात्रेण यथाक्रमम् ॥
जेष्ठ भगिनी भगिन्यां पंचगव्येन सिंचयेत् ॥

आमा वाबु दाजुभाइ मृत हुँदा तीर्थमा स्नान गरी पंचगव्य लिएर नयाँ वस्त्र लगाएपछि मात्र शुद्ध हुन्छ। सन्तान (फुकीहरु) वा विवाहित दिदी बहिनी मृत हुँदा तीन दिन भएपछि स्नानगरी पंचगव्य लिएर मात्र शुद्ध हुन्छ ।

पुनः वज्रसत्वपाराजिकामा उल्लेख छ :

महापातक नाशाय सिंचनं गव्यपंचकम् ।
एतेन शुद्धते कायं शोधन व्रत कर्मषु ॥

महापतक पाप नाश गर्नलाई पंचगव्य छर्कनु पर्दछ। पंचगव्यले मात्र शोधन गर्दछ। व्रतकर्ममा पनि शुद्ध गर्ने पंचगव्य नै हो। यो कुरा वज्रसत्वपाराजिकायमा उल्लेख छ।

**पंचगव्य औषधि :**

पूर्वकालमा शाक्यमुनि वुद्धले जलवाहन जातकमा पंचगव्य घृत औषधि वनाई प्रयोगगरी उद्धार गर्नु भएको जातक अवदानमा भनिएको छ।

**पंचगव्य घृत :**

> गो शकृद रस दध्यं च क्षीर मुत्रैः समै घृतम्।
> सिद्धं चातुर्थिकोन्माद: ग्रहापस्मार नाशनम्॥

गोदधि, गौदुग्ध, गोमुत्र, गोघृत, गोमय यति पाँच २ तोला बरावर भागराखि अग्निपाक गर्नु पर्दछ। पंचगव्य घृत तयार हुन्छ। यो वुद्ध वचन भन्ने उल्लेख छ।

गुण : चातुर्थिक ज्वर जीर्ण ज्वरमा चार दिनमा एक पटक आउने ज्वर उन्माद (बहुलाउने) ग्रहारपस्मार समयमा आउने रोगलाई मात्रा १ तोलाको प्रमाणले सेवन गराउने। अवधि १५ दिन भित्र उक्त रोग शान्त भएर जान्छ भनी जातक अवदानमा उल्लेख छ।

यो पंचगव्य घृत वास जलवाहन बोधिसत्वले प्रयोग गर्नु भएको सत्य प्रमाण छ। त्यस्तै अर्को थुप्रै अमृत समान भनी वर्णन गरिएको छ। घृणा गरी तिरस्कार गर्नेहरुलाई बुद्धको सुदृष्टि पर्ने छैन। सधैं दुःखि भइरहन्छ।

**पंचगव्यलाई नमस्कार गरी रचिएको स्तोत्र**

> नन्दा भद्रा जया सौम्या कपिलाये नमोनमः।
> प्रसीदस्व महालक्ष्मी आयु आरोग्य संपदम्॥

नन्दा भद्रा जया सौम्या कपिला नाम भएका तपाईलाई नमस्कार छ। महालक्ष्मी हुनुभएकी तपाई आयु आरोग्य वृद्धि गरी प्रसन्न हुनुहोस्।

पंचगव्यको परिचय र महत्व सारांश समाप्त।

**शुभम्।**